| | | |
|---|---|---|
| ग्रन्थको नाम | : | साहित्यवाटिकाको कवितामञ्जरी |
| लेखक तथा संयोजक | : | शरदकुमार भट्टराई |
| सर्वाधिकार | : | © प्रकाशकमा सुरक्षित |
| प्रकाशक | : | श्रीशरदकुमार भट्टराई |
| प्रकाशन मिति | : | वि.सं. २०७४ माघ २२ गते |
| प्रकाशित सङ्ख्या | : | ३०० |
| मूल्य | : | रु. ५००।– |
| कम्प्युटर सेटिङ्ग | : | श्रीखड्गप्रसाद खनाल |
| मुद्रक | : | एलायन्स प्रिन्टर्स एण्ड मिडिया हाउस प्रा.लि. |
| ISBN | : | 978-9937-0-3597-2 |

# 'साहित्यवाटिकाको कवितामञ्जरी' मा विहङ्गावलोकन

जीवन चिन्तन, आकाङ्क्षा, आवेग, अनुभव, संस्मरण र संवेदनाहरूको सञ्चिति हो । यो मानवजातिको मौलिक गुण पनि हो । यिनै अमूर्त तत्त्वहरूको मूर्त आकार हाम्रो शरीर हो । शरीरको आदि र अन्तको मध्यान्तरलाई सतहमा जीवन भन्ने गरिएको हो । जीवनको यही सञ्चितिलाई कसैले सहज र सुन्दर शैलीमा व्यक्त गर्दछन् भने कसैले भगीरथ प्रयत्न गरे पनि यो व्यक्त भइदिँदैन । कुनैकुनै प्रतिभाशाली व्यक्तिले मात्र र त्यो पनि कहिलेकाहीँ मात्र यस्तो अभिव्यक्ति दिन सक्छन् । यही अमूर्त राशिलाई सीप पुर्‍याएर व्यक्त गर्ने व्यक्ति कवि हुन्छन् भने सर्वत्र कवित्वशक्तिको आभा दीप्त पारेर अभिव्यक्ति दिनेचाहिँ सुकवि भनिन्छन् । यस्तो सत्यको सिद्धि भामहबाट पनि भएको छ ः

गुरूपदेशादध्येतुं शास्त्रं जडधियोऽप्यलम् ।
काव्यं तु जायते जातु कस्यचित् प्रतिभावतः ।। (काव्यालङ्कार १।५)

अर्थात् मन्दमतिहरू पनि गुरुबाट शास्त्रको अध्ययन गर्न समर्थ हुन्छन् तर काव्यचाहिँ कहिलेकाहीँ कोहीकोही प्रतिभाशाली व्यक्तिबाट मात्र जन्मिन्छ । यसबाट विद्वत्ताभन्दा प्रतिभा दुर्लभ छ र प्रतिभाभासित कवित्व झनै सुदुर्लभ रहेछ भन्ने निष्कर्ष बुझिन्छ । यसरी प्रतिभाप्रसूत कवित्व भएका व्यक्ति नै सुकविको स्थान र सम्मान पाउँछन् । 'साहित्यवाटिकाको कवितामञ्जरी' लाई यही मान्यताका छेउछाउबाट चियाउन सकिन्छ ।

'साहित्यवाटिकाको कवितामञ्जरी' कवि शरदकुमार भट्टराईद्वारा सम्पादित ११३ ओटा काव्यकविताको सङ्ग्रह हो । यहाँ पारिवारिक सदस्यभित्रका प्रौढ, मध्यमवय र युवापुस्ताका रचना समाविष्ट

छन् । यसमा 'आन्तरद्वन्द्व' (११७ श्लोक) र 'माता' (७१ श्लोक) जस्ता खण्डकाव्यधर्मी रचनादेखि फुटकर कविता, मुक्तक र लोकभाकाका गीत सङ्गृहीत छन् । शरदकुमारका पिता धर्मदत्तदेखि नातिनी सर्वज्ञासम्मका अठार जना सदस्यहरूका कविताको सँगालो भएकाले यसलाई पारिवारिक काव्यवंशावली भन्न सकिन्छ । यस अर्थमा यो सङ्ग्रह आनुवंशिक सिर्जनात्मक प्रतिभाको प्रमाण पनि बन्न पुगेको छ। आमाबाबुलाई समेत टाढा देख्ने विकासे पुस्ताको हाइफाइ बढ्दै गएको वर्तमान समयमा आफ्ना मात्र नभई पितामाता, कान्छी काकी, ठुली दिदी, दाजु, धर्मपत्नी, बहिनीहरू, छोरीहरू, छोराहरू, बुहारीहरू, भतिजी र नातिनीका समेत रचना समावेश गरेर सङ्ग्रह तयार पारी प्रकाशन गर्नु पारिवारिक एकता र सद्भावको प्रेरणा पनि हुँदै हो ।

शास्त्रीय छन्द, गीतिलय र गद्यशैलीमा लेखिएका यी कविता अनेक चिन्तन, विचार, संस्मरण र संवेदनाका वाहक छन् । सरल र सङ्क्षिप्त रूपमा बुझ्नका लागि कविव्यक्तित्व र विषयवस्तुको केन्द्र खोजी गर्नुपर्ने हुन्छ । यहाँ कविव्यक्तित्वको केन्द्र कविसम्पादक शरदकुमार स्वयम् देखिनुहुन्छ भने विषयवस्तुको केन्द्र मातृपितृवन्दना र अद्वैत वेदान्त रहेको छ। कविसम्पादकका दाजु पशुपतिप्रसाद कविव्यक्तित्व र प्रवासी नेपालीमा नेपालप्रेमको उद्बोधन विषयवस्तुका सहकेन्द्रझैँ अनुभूत हुन्छन् । अझै गहिरिएर हेर्नेहरूका लागि पशुपतिप्रसादको कवित्वशक्ति कतैकतै त कविसम्पादककै साँधसम्म पुगेको पाइनेछ । भक्तिभाव र ब्रह्मचिन्तनको मूल प्रवाहमा अन्य विषय सहकारी बनेका छन् । प्रमाणस्वरूप केही उदाहरण यसरी देखाउन सकिन्छ :

**(क) मातृभक्ति**

आमा आऊ सहज सपनी बीचमा माथिबाट
बिस्तारै नै मधुर ममतापूर्ण राखेर हात ।

मेरो सारै विकल मनमा शान्तिको लेप लाऊ
हाँस्तै आऊ पलभर यहाँ सुस्त चालेर पाऊ ।।  (शरदकुमार : माता )

(ख)**पितृभक्ति**

आफू कत्ति नखाई दुःख सहँदै चारो चुचोमा लिई
दौडन्छन् जसरी चरा ति बिचरा बच्चाहरू सम्भिmई ।
त्यस्तै जन्मभरी कडा दुःख गरी हाम्रै गरी चिन्तन
बाबा जानुभयो अनन्तपथमा केही नबोलीकन ।। (पशुपतिप्रसाद : श्रद्धाञ्जलि)

(ग ) **भगवद्‌भक्ति**

देखी जरा मरण रुग्ण खुलेन चेत
संसारको मद पिएर थिएँ अचेत ।
ऐले खुल्यो क्षणिक चेत भएँ अशक्त
सद्ज्ञान छैन न छ भक्ति भएँ विरक्त ।। (शरदकुमार : संसार )

(घ) **गुरुभक्ति**

अज्ञानको ध्वान्त धुवाँ भगाई
जल्ले दिए ज्ञान दियो जगाई ।
दिए सहारा जसले मलाई
प्रणाम मेरो गुरु पद्मलाई ।। (शरदकुमार : गुरुवन्दना )

(ङ) **ब्रह्मचिन्तन**

नृजन्म हो सकलमा अति नै विशेष
यैबाट पाउन सकिन्छ परात्परेश ।
जानेर तत्त्व सम आन्तर चक्षु खोली
ब्रह्मास्मि भै बसिरहूँ चुप भै नबोली ।। (शरदकुमार : अहं ब्रह्मास्मि )

उपर्युक्त उदाहरणहरूबाट 'साहित्यवाटिकाको कवितामञ्जरी' मा भक्ति र वेदान्त नै मियोका रूपमा रहेका छन् र अन्य कथन यिनकै लीलामय प्रतिरूप हुन् भन्ने छनक बुझिन्छ ।

यस सङ्ग्रहका सर्जकहरूमध्ये कविसम्पादक र उहाँकी धर्मपत्नी

इन्दिरा तथा दाजु पशुपतिप्रसाद वीतराग ब्रह्मविद् हुँदाहुँदै पनि यही संसारका द्रष्टा र भोक्ता हुनुहुन्छ । संसारको प्रभाव उहाँहरूमा पनि परेकै छ । परिणामस्वरूप कतिपय कवितामा समकालिक अवस्थाको सङ्केत पनि भएको छ । शासक अक्षम र अपराधी भयो भने समाज बिग्रिन्छ र राष्ट्र बेचिन सक्छ भन्ने यथार्थलाई यसरी दर्साइएको छ :

अन्धाले जब कुर्सीमा बसी शासन गर्दछ ।
समाज राष्ट्र यो सारा भड्खालातिर पर्दछ ॥
जुवा आज चलेको छ राष्ट्र राखेर दाउमा ।
बिकेको छ यहाँ सत्व कौडीका मात्र भाउमा ॥ (शरदकुमार : आन्तर द्वन्द्व )

मानिस आफूलाई नचिनी भौतिक सम्पत्तिको सञ्चयमा लागेको छ । आफूलाई नहेरी तृष्णावश व्यर्थमा कुदिहिँड्ने वर्गलाई दिएको गहिरो वेदान्ती उपदेश यस्तो छ :

भित्री नेत्र गरेर बन्द अहिले कुद्छौँ सधैँ बाहिर
हेर्ने फुर्सद छैन भित्र कहिल्यै फर्केर आफैँतिर ।
कुद्दैमा सकिइन्छ जीवन वृथा तृष्णा लिई दुस्तर
फर्कौँ भित्र र आफुमै रत बनौँ भित्रै छ आफ्नू घर ॥

(शरदकुमार : भित्रै छ आफ्नू घर)

जीवन बिताउने मानिस त सबै छन् तर जीवनको व्यवस्थापन गर्न जान्ने ज्यादै कम छन् । युवा अवस्थामै प्रौढ वयको सम्भाव्य अवस्थाका लागि आचरणमा सुधार नगर्ने र अध्यात्ममुखी मानसिक तयारी पनि नगर्ने मनमोजी वर्गलाई यसरी सचेत गराउन खोजिएको छ :

टेर्दैनन् घरका अटेर सब छन् जो भित्र या बाहिर
आफ्नै इन्द्रिय छन् अटेर सब यी टेर्ला र को बाहिर ।
पैले शक्ति छँदा सबै थरथरी काम्थे डराईकन
उल्टै तीसँग लुक्नु पर्छ अहिले मुन्टो लुकाईकन ॥

(शरदकुमार : प्रारब्धका भै वश )

अहिले देशमा एकातिर बेरोजगारीको विकराल समस्या छ भने अर्कातिर व्यक्तिमा वित्तैषणाको अनन्त उडान पनि छ। फलतः ऊर्जाशील वर्ग विदेश पलायन भइरहेको छ र उतै स्थायित्व पाउँदा गौरव गर्दै छ। यसबाट धेरै आमाबुबा र अभिभावकले सन्तान भएर पनि नभएको रिक्तता र तिक्तताको अनुभूति गर्नुपरिरहेको छ। सन्तान जन्माउँदा, हुर्काउँदा, बढाउँदा र पढाउँदा पैदा भएको सुखद र सुरक्षित भविष्यको बलियो आशा र मीठो अकाङ्क्षा 'दरिद्राणां मनोरथाः' झैँ विलीन हुँदै गएका छन्। सन्तानले डाँडाकाँडा ढाकेका बाबुआमा र अभिभावक अनाथ हुन पुगेका छन्। आफूलाई काम र माम दिने विदेशीप्रति अनन्य भक्त बनेर बफादारी र जिम्मेवारी पूरा गर्नै पर्ने तर जन्म दिने देववत् पितामाताप्रति चाहिँ अलिकति पनि नैतिक जिम्मेवारी र कर्तव्य पूरा नगर्ने सन्तानबाट सुखीभन्दा दुःखी हुने मानिस आज धेरै छन्। समयले सिर्जना गरेको वास्तविकताको यो बाण शरदकुमार दम्पतीप्रति पनि सोझिएको पुष्टि सङ्ग्रहका कविताले नै गरेका छन्। कविसम्पादक शरदकुमार र उहाँकी धर्मपत्नी इन्दिरा जतिसुकै ब्रह्मज्ञानी भए पनि र उहाँहरूका सन्तान सभ्य, शान्त, सुशील, शिक्षित र सदाचारी भए पनि जीवनको उत्तरार्धमा आफ्ना सबै सन्तानका बीचमा शान्ति र सन्तोषसँग बस्न चाहने लोभबाट चाहिँ मुक्त हुनुहुन्न। यस सङ्ग्रहका कतिपय कविताको गहिराइ खोतलखातल पार्दा आजीवन अभ्यास गरेको अद्वैत वेदान्तले पनि यो लोभ तिरोहित पार्न नसकेझैँ बुझिन्छ। यी पद्य यस कथनका प्रमाण हुन् :

विदेशमा गई बस्छौ दाजुभाइ सुहृज्जन।
आऊ फर्केर नेपाल गरौँ सेवा मिलीकन॥
वृद्ध मातापिता छोडी बस्ता के शान्ति पाउला।
त्यसै कारण नेपाल फर्क आनन्द पाउला॥

(सतीशकुमार : फर्केर आऊ घर)

भौतिकी सुविधा सारा पाए पनि कताकता ।
मनमा भित्र खट्कन्छ अभाव अनि रिक्तता ।।
भौतिकी सुखका साथै चाहिन्छ स्नेहको पुट ।
अन्यथा हुन्छ बाँचेको एकाङ्गीपनले युत ।।

(सञ्जीवकुमार : स्नेहसंसिक्त मन्दिर)

बिर्सियौँ जननी धर्ती माटाको वास बिर्सियौँ ।
आफ्नो उमेर वर्णादि शील संस्कार बिर्सियौँ ।।

(शरदकुमार : हामी स्वस्थ बनी जिऔँ)

ग्रामीण गृहिणीले सधैँ श्रम गरेर बाँच्नु परेको छ । प्रस्तुत सङ्ग्रहकी सहभागी कवयित्री एवम् कविसम्पादककी धर्मपत्नी इन्दिराले पतिगृह लामिडाँडामा यापन गरेको श्रमशील जीवनको एक झलक देखाएर त्यस्ता गृहिणाीको स्पष्ट तस्बिर खिचेको पाइन्छ :

कैले बेसी अनि त कहिले लेकमा घाँस काट्थेँ
डोको बोक्थेँ विकट पहरा वृक्ष झाडी चहार्थें ।
गाईभैँसी दुहुन म थिएँ नित्य नै तम्तयार
खेतीपाती सहित सब नै काममा होसियार ।। (इन्दिरा : आमा )

‘साहित्यवाटिकाको कवितामञ्जरी’ मा काव्यकविता मात्र छैनन्, कतैकतै काव्यकविताबारे मान्यता पनि छन् । जस्तै :–

लच्छेदार भरून् शब्द अलङ्कारहरू भरून् ।
माधुर्य रसले पूर्ण सीधुका द्रवले भरून् ।।
जो जस्तो वृत्तिमा लेखून् सशक्त हुनुपर्दछ ।
कविता प्राणवान् बन्न निर्दुष्ट हुनुपर्दछ ।।

(शरदकुमार : के लेख्ने भाव नै विना ?)

वर्तमान विश्व एकातिर विकास र अर्कातिर विसङ्गतिबाट अघि बढिरहेको छ । यो शताब्दी नै सूचनाप्रविधिको नेतृत्वमा चलेजस्तो भान हुन्छ । यसैको एउटा उपलब्धिका रूपमा मोबाइलको अत्यधिक

प्रयोग देखिन्छ । सुसूचित हुन र जीवन सहज बनाउन यो अत्यावश्यक भइसकेको पनि छ । तर यसको बढ्दो दुरुपयोग पनि कम घातक छैन । एकथरी वर्गका लागि त यो अप्रतिबन्धित लागु पदार्थजस्तै लठ्याउने साधन बनेको देखिन्छ । त्यसैको सन्तान बनेको फेसबुक कतिपयका लागि अहिले केवल कालक्षेपण र मनोरञ्जनको साधन मात्र हुन पुगेको छ । ध्यान, ज्ञान, चिन्तन, मनन र सिर्जनात्मक क्षमतालाई समाप्त पारेर अधिकांश समय वानरले जुम्रा खोजेझैँ फेसबुकमा नानाभाँती मसला खोज्ने व्यसनीवर्गप्रति प्रश्नसूचक व्यङ्ग्य गरिएको छ र सचेत पार्न पनि खोजिएको छ :

फोटो खिची जथाभावी भरेर यिनमा सब ।
हेर्नै मुस्किल भो आज कसरी हेर्नु यी अब ॥
कतै कुकुरले भुक्छ बिरालो म्याउँ गर्दछ ।
अर्धनग्न कतै नारी देखिन्छन् लाज छर्दछ ॥
जे देखियो खिच्यो त्यो नै के हाल्नु उपयुक्त हो ?
यल्ले प्रभाव के पार्छ न सोच्नु नै अयुक्त हो ॥
मोबाइल टिभि ट्विटर् सधैँ थिची थिचीकन ।
गर्ने हो कसरी ज्ञान अद्वैत ब्रह्मचिन्तन ॥ (शरदकुमारः मुहारपुस्तिका )

कवि अनेक प्रकारका हुन्छन् । राजशेखरले कविका तीन कोटि बताएका छन् : शास्त्रकवि, काव्यकवि र उभयकवि । यीमध्ये काव्यकविका आठ उपभेद गणना गरिएका छन् जसमा एउटा उपभेद शास्त्रार्थकवि हो । शास्त्रको विशिष्ट अर्थलाई काव्यमा समावेश गर्ने कवि शास्त्रार्थकवि हो । प्रस्तुत सङ्ग्रहका सर्जकहरूमध्ये धर्मदत्त, पशुपतिप्रसाद र इन्दिराका रचनामा पनि वेदान्तको प्रभाव छ तापनि केन्द्रमा कविसम्पादक शरदकुमार स्थिर देखिनुहुन्छ । शास्त्रीय विशिष्ट अर्थलाई कवित्वको कालीगडीबाट कुँदेर अभिव्यक्त गरेकाले उहाँलाई यस सङ्ग्रहका सन्दर्भमा शास्त्रार्थकवि हुने अधिकार रहेको छ ।

'साहित्यवाटिकाको कवितामञ्जरी' का केही कविता र भक्तिगीत भाव र भाषाका दृष्टिबाट परिष्कार्य छन् । खासगरी मातृतहका सर्जकहरूमा यो स्थिति देखापर्छ । तर विकट ग्रामीण परिवेशमा सामान्य औपचारिक शिक्षा नपाएका र आदर्श गृहस्थाश्रम धानेर बसेका मातृवर्गबाट तात्कालिक अवस्थामा भएको यति सिर्जना पनि दोषी नभई प्रेरणाको उत्स बन्न पुगेको पाइन्छ । विहङ्गावलोकनको सीमान्त कोणबाट हेर्दा भगवद्भक्ति, मातृपितृभक्ति, वेदान्तप्रेरित जीवनयापनको आग्रह, समकालिक विसङ्गत जीवनचर्याप्रति असहमति र सुधारको सन्देश, सुखद र शान्त वयोवृद्ध अवस्थाको पूर्वतयारी, प्रवासी नेपालीहरूमा देशभक्तिभावको सञ्चार र स्वदेश फर्किन निवेदन, सञ्चारप्रविधिको सदुपयोग गनुपर्ने विनयी उपदेश एवम् पारिवारिक र सामाजिक सद्भावका साथै राष्ट्रिय एकताको सबलीकरण 'साहित्यवाटिकाको कवितामञ्जरी' का काव्यपराग देखा पर्छन् ।

ध्रुवप्रसाद भट्टराई

२०७४।९।१४
पुत्रदा एकादशी

साहित्यवाटिकाको

# कवितामञ्जरी

प्रस्तुत 'साहित्यवाटिकाको कवितामञ्जरी' हाम्रो पारिवारिक काव्यसङ्गम वा साहित्यवाटिका अथवा कवितासङ्ग्रह हो । हाम्रो वंशपरम्परामा मैले जानेसम्म हाम्रा तीनपुस्तादेखि नै यो साहित्यानुरागी उदात्त परम्परा अक्षुण्णरूपमा चालिआएको पाइन्छ । यो परम्परा हाम्री २२ औँ पुस्ताकी गुरुमाता बालकुमारीदेखि चलिआएको देखिन्छ । त्योभन्दा अघिको पुस्तामा यो साहित्यिक वा काव्यिक प्रतिभा विद्यमान थियो वा थिएन त्यस सम्बन्धमा लिखित वा श्रुतिपरम्पराबाट पनि आजसम्म ज्ञात हुन सकेको छैन । अनुसन्धानबाट भविष्यमा थाहा पाउन सकियो भने उल्लेख गरिने छ । अहिले म वर्तमान पुस्ता र त्यससँग निकट भूतकालका स्वयं अनुभूत आदरणीय तथा आदरणीया काव्यकारहरू र नयाँ पुस्ताका काव्य प्रतिभाका सम्बन्धमा उल्लेख गर्ने प्रयासमा छु ।

मेरी आबाल ब्रह्मचारिणी गुरुमाता बालकुमारीज्यूका वाणीद्वारा सधैँ लौकिक तथा शास्त्रीय कविता, श्लोक, कथा, कहानी, ऐतिहासिक घटनाहरू पनि अनवरत निःसृत भइरहन्थे । घररूपी पाठशालाकी मेरी प्रथम गुरु उहाँ नै हुनुहुन्थ्यो । उहाँद्वारा उच्चारित रामायण, कृष्णचरित्र, भागवतीस्तोत्र, गुणरत्नमाला आदि पौराणिक, आध्यात्मिक, लौकिक गीत र नारीहरूको मानसिक सुखदुःखको अभिव्यञ्जक सँगिनी समेतले मेरो घर सधैँ गुञ्जायमान भइरहन्थ्यो । मेरो कविता, काव्य र श्लोकप्रतिको चाख त्यसैबाट उत्पन्न भएको

हो । उहाँद्वारा रचित श्लोक, कविता आदि हाल उपलब्ध छैनन् र उहाँले रचना गरेर भनेका वाक्यहरू पनि मेरा स्मृतिमा छैनन् । उहाँका सृजना र रचनाहरू उपलब्ध गरेर यस मञ्जरीमा समावेश गर्न नसकिएको भए पनि उहाँका स्मृतिमा मैले २०३७ सालमा दाङको तुलसीपुरमा कार्यरत रहँदा लेखेको 'गुरुमाता' नामक कविता श्रद्धासुमनका रूपमा यसमा प्रस्तुत गरेको छु ।

मेरा पिताजी बहुप्रतिभासम्पन्न व्यक्ति हुनुहुन्थ्यो । तत्कालीन ग्रामीण समाजमा आवश्यक पर्ने प्रायः सबैजसो विषयहरू जान्नु हुन्थ्यो । यी कुराहरू अनुस्मृतिमा मैले उल्लेख गरिसकेको छु । प्रकृत सन्दर्भ कविताको भएकाले पिताजीको काव्यिक प्रतिभाको मात्र यहाँ जानेको र सम्झिएसम्मको उल्लेख गर्दछु । उहाँ आशुकवि हुनुहुन्थ्यो । त्यस वेला धार्मिक उत्सव हुँदा रातमा बालन खेलाउने चलन थियो । त्यसमा पिताजीको प्रमुख भूमिका रहन्थ्यो । तत्कालीन समयमा विवाह, व्रतबन्ध आदि धार्मिक तथा सामाजिक कार्यहरूको ठूलो महत्त्व हुन्थ्यो । विवाह रात्रिमा गरिन्थ्यो । वर र वधूपक्षका पढेलेखेका प्रौढ तथा युवा व्यक्तिहरू रातभरि जग्गेमा जागा भएर दोहोरी कण्ठ गरेका भानुभक्तीय रामायण, कृष्णचरित्र, भागवतीस्तोत्र, गुणरत्नमाला समेतका धार्मिक तथा आफैँले रचना गरेका छन्दोबद्ध श्लोकहरू भनेर एक पक्षले अर्को पक्षलाई पराजित गर्ने होड चल्दथ्यो । तिनमा पिताजीको कुनै एक पक्षका तर्फबाट श्लोक भन्ने अग्रगण्य स्थान रहन्थ्यो । उहाँ प्रत्युत्पन्न मति भएका व्यक्ति भएकाले आफूले सम्झिएका श्लोकहरू पर्याप्त नभएमा तुरुन्त नै श्लोक कथेर पनि भन्न सक्नुहुन्थ्यो ।

पिताजी युवा अवस्थादेखि वृद्धावस्थासम्म पनि श्लोक वा कविता आदिको सृजना गरिरहनुहुन्थ्यो । यस कुराको चर्चा मैले

अनुस्मृतिमा गरिसकेको छु । त्यसबाट र यसै मञ्जरीमा प्रकाशित पिताजीका कविताहरूबाट पनि उक्त तथ्यको झल्को पाउन सकिन्छ।

माता रन्धता लेखपढ गर्न नसक्ने भए पनि अनुभूत सुख दुःखजन्य खुसी वा दुःखलाई अभिव्यक्त गरेर मानसिक हर्ष र शोकलाई अन्तःकरणबाट विरेचन गर्नुहुन्थ्यो । यसका अतिरिक्त माइतीको सम्झनामा अभिव्यक्त विरह, घरमा पाएको दुःख, पति र सन्तानको सम्झना गर्दै गाइने प्रचलित सँगिनी, स्थानीय लोकलयका गीतका साथै धार्मिक भजनसमेत गुनगुनाउने गर्नुहुन्थ्यो। सँगिनी प्रायः तीजमा सामूहिकरूपमा गाइन्थ्यो भने अरू हर्ष वा दुःख पोख्ने गीत भने दिदी बहिनी, देउरानी, जेठानी, नन्द, आमाजु र दौँतरी सगिनीहरूसँग घाँस काट्न र दाउरा लिन वन जाँदा र मेलापातमा समेत गाउने चलन थियो। आमा पनि कहिलेकाहीं ती सबैमा सम्मिलित भएर सार पनि मिलाउनु हुन्थ्यो । तिनको सामान्य प्रतीकका रूपमा यस किताबमा समेत छापिएका आमा, कान्छी काकी, दिदी रमा, बहिनी सीता र ताराका रचनाहरूबाट बुझ्न सकिन्छ । बैनी ताराका कविताहरू भावनायुक्त र संवेदनापूर्ण छन्। यिनका कवितालाई राष्ट्रकवि माधव घिमिरेले पनि प्रशंसा गर्नुभएको छ।

दाजुका कविताहरू सामयिक, मार्मिक र भावनाप्रधान छन्। हाम्रा परिवारका नयाँ पुस्तामा पनि काव्यिक प्रतिभा बिस्तारै प्रच्छन्नरूपमा प्रस्फुटित हुँदै आएको देखिन्छ। प्रतिनिधिपात्रका रूपमा यहाँ मेरी छोरी सरिता र सविता, छोरा सञ्जीव, सतीश, सगुन, बुहारी सुस्मिता, पूजा, भतिजी डा. कुमुद र नातिनी सर्वज्ञाका कविताहरूको उल्लेख गर्न सकिन्छ। यस मञ्जरीमा मेरी धर्मपत्नी इन्दिरा र मेरा कविताहरू पनि राखिएका छन् ।

मेरा कविताहरूमा केही चिरस्मरणीय र मलाई राम्रा लागेका कविताहरू प्रकाशित भइसकेका काव्य र कवितासङ्ग्रहहरूबाट समेत समावेश गर्नुका साथै केही वर्षदेखि मुहारपुस्तिका (Facebook) मा सम्प्रेषण (Post) गरेका नयाँ, समसामयिक तथा वैराग्युक्त वेदान्तपरक अप्रकाशित कविताहरू पनि समावेश गरिएका छन् जसमा प्रायः जसो Facebook मा व्यक्त गरिएका कविताहरू पर्दछन् । यिनलाई कविताको विषयसूचीमा नै Fb चिह्नबाट चिह्नित गरिएको छ ।

हाम्रो परिवारको परम्परा धेरै अघिदेखि नै काव्यिक रहेको कुरा मैले आफ्ना विभिन्न प्रकाशित ग्रन्थहरूमा उल्लेख गरिसकेको छु । त्यसैको प्रतीकका रूपमा आज हाम्रो यो साहित्यवाटिकाको प्रथम कवितामञ्जरी प्रस्फुटित भएको छ । यसको बीजारोपण प्रच्छन्नरूपले धेरै पटक भएको थियो तापनि स्पष्टरूपमा भने वि.सं. २०३७ साल आषाढ १४ गते हाम्रो घर विराटनगरमा भएको थियो । त्यस बेला म राप्ती अञ्चलको तुलसीपुरमा रहेको तत्कालीन अञ्चलाधीश कार्यालयमा गृहमन्त्रालयबाट विशेष कामका लागि काजमा गएको थिएँ । इनरुवाको घरमा आमा बेरामी हुनुभएको र विराटनगरमा उपचारका लागि जानुभएको थाहा पाएर म पनि त्यहीँ गएको थिएँ । त्यस समयमा आमा रन्धताका साथमा कान्छी काकी सरस्वती, ठुली दिदी रमा, दाजु पशुपतिप्रसाद भट्टराई, भाउजू निर्मला, कान्छी बैनी तारा र म शरदकुमार भट्टराई समेत भेला भएका थियौँ । त्यस अवसरमा कवितावाचन र सँगिनी गाउने स्पृहणीय तथा मनोरम कार्यक्रम भएको थियो जसमा आमा लगायत त्यहाँ भेला सबैबाट वैराग्यपूर्ण कविता, सँगिनी, गीत, भजन आदि प्रस्तुत भएका थिए । मैले आफ्नो सोख अनुसार सबै टेप गरेर साथमा ल्याएको थिएँ र

अझै पनि त्यो मसँग सुरक्षित नै छ। यस मञ्जरीमा प्रकाशित भएका आमा, कान्छी काकी, दिदी र बहिनी ताराका रचनाहरू त्यसै टेपबाट उतारेर समावेश गरिएको हो । अन्यथा ब्रह्मलीन आमा र काकीका रचनाहरू यसमा समावेश गर्न सम्भव हुने नै थिएन ।

यो कवितामञ्जरी प्रकाशनको साक्षात् उत्प्रेरणा भने मेरो निवासस्थानमा गत असोज १९ गते कोजाग्रत पूर्णिमाका दिन आयोजना गरेको शुभकामना आदानप्रदान समारोहबाट मलाई प्राप्त भएको थियो । त्यो समारोहको आयोजना अमेरिका बसेका हाम्रा छोरी ज्वाइँ, नातिनी, नाति, पनातिनी, क्यानाडामा बसेका छोरा, बुहारी, अष्ट्रेलियामा बसेका भतिजा, भतिजी, ज्वाइँ, नाति, नातिनीका साथै काठमाडौँमा रहेका दाजु, भाउजू, छोरी, ज्वाइँ, छोरा, बुहारी, नातिनी, बैनी, भान्जा, भान्जी समेतसँग शुभकामना प्रकट गर्नका लागि नै भएको थियो। जुन अपूर्व र स्मरणीय थियो। शुभकामना आदानप्रदानपछि अरू कार्यक्रमका अतिरिक्त कवितावाचनको कार्यक्रम पनि राखिएको थियो । भर्खरका बालबालिकाले पनि कवितावाचन गरेका थिए। प्रोत्साहनस्वरूप तिनीहरूलाई भने नगद पुरस्कार समेत प्रदान गरिएको थियो। यस सङ्ग्रहमा उक्त समारोहमा वाचन गरिएका केही कविताहरू पनि समावेश गरिएको छ।

यस मञ्जरीमा स्वदेश र विदेशमा समेत रहेका हाम्रा मातापिताका प्रतिभावान् शाखा र सन्तानहरूका रचनाहरू समावेश गरेर योभन्दा बृहत्तर कलेवरमा यसलाई प्रकाशन गरेर सङ्ग्रहणीय बनाउनका लागि मैले मिति २०७४ साल असोज २३ गते तदनुसार सन् २०१७ अक्टोबर ९ मा फेसबुकसमेतबाट आग्रह गरेको थिएँ । त्यसपछि प्राप्त भएका कविताहरू समेत समावेश गरेर यो 'साहित्यवाटिकाको

कवितामञ्जरी' प्रकाशित भएको हो । यसमा प्रकाशनार्थ आफ्ना कविताहरू उपलब्ध गराएर सहयोग पुऱ्याउनुहुने सबैलाई धन्यवाद दिन्छु। यस प्रकाशनले हाम्रो परिवारको इतिहास, संस्कार र साहित्यिक प्रतिभा समेत प्रकाशन गर्न सहयोग पुऱ्याउने छ। यो सबैका लागि सङ्ग्रहणीय हुनेछ भन्ने आशा एवं विश्वास गर्दछु।

अन्त्यमा यस कवितामञ्जरीलाई आद्योपान्त पढेर आवश्यक सम्पादनका साथै महत्त्वपूर्ण आफ्नो मन्तव्य समेत व्यक्त गर्नुहुने विद्वान् सहप्राध्यापक ध्रुवप्रसाद भट्टराईज्यूमा म हार्दिक धन्यवाद ज्ञापन गर्दछु । यस कविमञ्जरीलाई समयमै अत्यन्त कुशलताका साथ उत्टङ्कण गरेर सहयोग गर्नुहुने श्रीखड्गप्रसाद खनालज्यूलाई पनि म धन्यवाद ज्ञापन गर्दछु। धन्यवाद ।

वसन्तपञ्चमी
२०७४।१०।८

विनीत
शरदकुमार भट्टराई



पूजनीया गुरुमाता बालकुमारी

(२०१८ साल वैशाखमा लिएको तस्वीर)



पूजनीया माता रन्धता भट्टराई तथा पूजनीय पिता धर्मदत्त भट्टराई
(२०१८ साल वैशाखमा लिएको तस्वीर)

# विषयसूची



# पिता धर्मदत्त भट्टराईज्यूका पत्रात्मक कविताहरू

श्रीगणेशाय नमः, श्रीवाग्वाण्यै नमः

# आर्तपुकार

यो संसार असारलाई मईले मायामहाँ लिप्त भै ।
पौरेछु बलसित सैकतमहाँ पानी बुझी मोह भै ॥

यो सब् आज अनित्य जानी अबता बुझेँ सबै सङ्गत ।
चेत् आयो अब वृद्ध भै दम बढी पर्दैछु काल्का वश ॥

घर्मा छैन कुटुम्ब सब् दश दिशा साथ्मा फगत् नारी छन् ।
पेट्मा दूध्विनु खालि नै सब दिनै दूधै न भै रुन्छ मन् ॥

पच्चिस् पच्चिस  शरद् पशुपति दुइ भाइ बाँधी मन ।
भैँसी किन्न तुरुन्त नै दुःख बुझी सोझै पठाऊ धन ॥

हुन्छौ वृद्ध तिमीहरू पनि पछि यै धर्मले सन्तति ।
ज्ञानी भैकन विष्णुलक्ष्मी सरिका हुन्छन् बताऊँ कति ॥

दृष्टि देऊ र कत्ति देर् नगरी है नुन्ले बढि दं हुँदा ।
हेर्नै हुन्न लवण् दुहान छैन घरमा को दिन्छ अर्को रुँदा ॥

पत्रप्रेषित मिति २०४६।९।२३।४



# विरक्ति

पैले बालखमा छँदा अति पियार् गर्थ्यौं जतन् खुब् गरी,
पारी जीर्ण भएर बेरूप जसै माया नभई फाल्दथ्यौ ।

त्यस्तै आज गएछ यो तन पनि साह्रा परिवारमा,
कत्ति काम नलागने बुझिसकि त्यागिसकें घर्महाँ ।

पैलाका दुई भाइ थे मदनझैँ स्वरूप् अझै सम्झँदा,
छाती फुट्तछ यो शरीर विष भै त्यो ता सबै सम्झँदा ।

तेस्रो जन्म भई झरे पृथिवीमा श्रीचन्द्रबिम्बै सरी,
देख्दामा मन खुस् भयो र गुरुका पर्सें चरण्मा परी ॥

अकाल् मृत्यु हटी चिरञ्जीवी हुने केही अनुष्ठान भए,
आज्ञा बक्सनुहोस् मलाई गुरुजी सम्झेर मेरो जये ।

सुनी यो गुरुले दया अति गरी एक् बीज दिनुभयो,
त्यही मन्त्र म जप्तछु अजतकै वर्षै एकाउन्न भो ॥

यै विश्वास भएर पुत्र दुईको दर्शन् मिल्यो बल्तल,
हेर्दामा शशिसूर्य झैँ चहकिला भो उन्नति उज्ज्वल ।

पैलेको अरू बातको म त बयान् गर्दिन केही पनि,
आदि अन्त्य एकै भयो गरुँ कसो प्राक्तन् बलियो छ नि ॥

हावाले लगिदिन्छ बोल्छु जति बात् सुन्दैन कोही पनि,
जो पर्छन् व्यवहारमा व्यय जति थाप्लो बुढाकै छ नि ।

पर्ला क्यै अब कीर्ति नाम कुलमा भन्ने त यस्तो परी,
सानैमा पति पत्नी जोड गरियो हर्षातिहर्षै गरी ॥

तेसैमा दुई भाइलाई परिवार् बढ्दा महा लुब्ध भै,
हामी जीर्ण बूढाबूढीकन कवै माया न भो क्यै न क्यै ।



# जन्मपत्रिका

१९९१ वैशाख शुक्ल त्रयोदशी १४ गते बिहिबार रात ४ घडी पला ३ वितेपछि जन्म भएको। उत्तरफाल्गुनीको तेस्रो पाउ। पितृप्रसाद नाम, हाल पशुपतिप्रसाद भट्टराई

पूर्वै माझकिरात पश्पति शरण् जिल्ला छ रावा खोला।
गंगा, कौशिकी, दुग्ध छन् समीपमा घर लामीडाँडा होला॥

बाजेको छ भवानी शंकर अनि पिता भए भोजराज्।
उन्की पत्नी विवाहिता कुल वधू जानेर गर्छिन् ती काज्॥

साध्वी श्रीमति रन्धता जननीको जातक् चतुर्थै परी।
तेस्रो पुत्र भएर जन्मन गए दाजु गए दुइ मरी॥

जन्मस्थान र गोत्र भो ग्रहदशा लेख्ने भयो मन् पनि।
उन्नाइस् सय नौ र एक महिना वैशाख शुक्लै अनि॥

तिथि पाई त्रयोदशी अधिकमास् चौधै गते बार् गुरु।
रात्रि चारघडी पला तीन बिती जन्म हुँदाको सुरु॥

जन्मैलग्न विछो छ खाली रहेको दोस्रो छ खाली धन।
तेस्रो मक्कर राहु पाउ भएको बन्धु मिलाप तोडन॥

चौथो कुंभ महा शनिश्चर अनि श्रीशुक्र छन् साथमा।
जन्मेको स्थल छोडी भोग गरेको देखिन्छ ज्योतिषमा॥

पाँचौ मीनमहाँ गई बुध बसी सद्बुद्धि दिन्छन् सदा ।
छैटौँ मेषमहा त मंगल रवि मार्छन् अरि सर्वदा ।।

पत्नी स्थान रहेछ खाली निजको खाली निधन देखियो ।
शत्रु मारी सुबुद्धि बढ्न निजको आर्जन् बहुत् देखियो ।।

धर्मस्थान महाँ छ केतु घटिया कम्ति धरम् देखियो ।
कर्मस्थान महाँ छ शुक्र आर्जन ठूलो पार्ने छ शत्रु वश ।।

एघारौँ गुरुचन्द्र लाभ् गरनमा सदा रहन्छन् वश ।
खर्च स्थान छ खाली नै तर ठूलो दाता हुने योग छ ।
लेखियो अनि देखियो ग्रहदशा बाँकी प्रभुकै भर ।।



# वैरागी मन

सिद्धि श्रीगणनाथ दुःख हरने एक्दन्त स्थूलोदर ।
ठूलो दुःख पऱ्यो असी वरसमा यो जीव चाँडै हर ॥

छोरा नाति पनाति नोकर अरू कुटुम्बको सौख्यमा ।
बस्न इच्छुक भै बडो दुःख गरेँ पैला उमेर बल् महाँ ॥

उल्टा पर्न गयो असी वरषमा पौत्रादिले यो तनु ।
खाई जीर्ण भयो छ अस्थि चमडा यो पीर कस्मा भनु ?

लेटी खाट महाँ अहँ अहँ गरी रात् भर बिताउनु छ ।
प्रातः काल भयो र घाँस फरुवा लिएर दिन काट्नु छ ॥

कल्ले जन्म दियो असार भवमा यो जाल फारी दिनु ।
हे भावि ! जुन कर्म आर्जन गरेँ त्यो कर्म भोगाउनु ॥

यै साल्कै अब माघ फागुन कि वा वैशाख मास्भित्रमा ।
पक्का लानु हओस् अरौटे म भई रहन्न यो विश्वमा ॥

केको शोच छ त्याग्नु के छ र ? यहाँ आखिर के लानु छ ?
माया मोह दया छ यो प्रकृतिको वर्दान संसारको ॥

चिन्ता गर्नु वृथा छ शान्त मनले त्याग्नु ठूलो धर्म हो ।
त्यागेरै पनि त्यागिने छ र कहाँ ? सब् मानसी भूल हो ॥

गैह्रो सिन्धु सरी भरिन्न मनको सब् तिर्सना मूल हो ।
ज्यादा लोभ र मोह हुन् विपदका दुर्भेद्य ढोकाहरू ।।

बन्नु पर्छ तटस्थ जित्न पलले यी मोह मायाहरू ।
वैरागी मन आतिदैन कहिल्यै निश्चिन्त झन् बन्दछ ।।



उमेर् पाक्यो दुःख बढ्यो, सन्सारदेखि मन् डढ्यो ।
यत्रा साँढे घर्मा छन्, छोडेर हिड्ने हुन्छ मन् ।।

बुद्धि भाका हेर्दैनन्, घर्मा भाका टेर्दैनन् ।
नौ बजे नभै उठ्तैनन्, बेकारी घर्मा बस्तैनन् ।।

हिँड्नु पऱ्यो रातमा, यौटा पासो छ साथमा ।
माया मोह छुटाइद्यौ, यो बन्धन हटाइद्यौ ।



## मङ्गलाचरण –

हरे राम हरे राम राम राम हरे हरे ।
हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे ॥

## सँगिनी –

बाबा र ज्यूका नि घरैका छानैमा नौ जोरै परेवा,
एकै जोर परेवा दाइजो देऊ बाबा नौ जोरै परेवामा ।
परेवाका शबदैमा म धन्दा छिनौला ॥

## छोराहरूको सम्झना –

बाह्र हाते पटुकी कम्मरैमा फेरो ।
कहाँ छौ नि बाबु ! मायै माऱ्यौ मेरो ॥

बाह्र हाते पटुकी कम्मरैमा फेरो ।
देशदेशै बस्छौ नि मायै माऱ्यौ मेरो ॥

कहाँ छौ नि बाबु ! मायै माऱ्यौ मेरो ।
घाँसै काट्न जानु हातै भरि ठेला ॥

देशदेशै हिँड्यौ नि दुई भाइ चेला ।
देश देशै बस्छौ नि दुवै भाइ चेला ॥





पूजनीया कान्छी काकी
सरस्वतीदेवीज्यूको
कविता

# पुकार

लामीडाँडा घर हो भट्टराई थर हो पोखेलकी छोरी म हुँ ।
सानै बालखमा पति मरिगए मेरा विपत् के कहुँ ॥

कोही छैन त आफ्नू कोही नरमाहाँ भगवान् आधार नै ।
जे गर्छौ अब पुत्रदायक तिमी छौ आज साधारणै ॥

तिम्रै हो सिरीसम्पति शिव हरे ! तिम्रै छ है सम्झना ।
दिदीका सँग नै हिंडे सब दिनै सक्तिन दिदी विना ॥

ज्ञान्बुद्धि अब केही छैन मनमा ठूलो विपत्मा म छु ।
पुत्र ! आपत् परेकी म छु ॥





# ठूली दिदी रमा पोख्रेलज्यूको कविता

# भाइलाइ अर्ती

हामी तीन् बहिनी भैकन सँगै छोरा दुई भाइ छन् ।
सारै चित्त नगर खिन्न तिमीले आनन्द राखेर मन ।।

ए भाइ ! अब जाऊ है इलममा तिम्रै सुरैमा रहू ।
आमाको पीर कत्ति लिनु छइन आनन्दले मन् सहू ।।

प्रार्थना – मनको इच्छा
मेरो चित्त भने छ आज गएको श्रीकृष्णका साथमा ।
दासी भैकन बस्न पाऊँ भनी यो बिन्ती छ है बातमा ।।

उत्तर –
मेरा साथमहाँ त दासी हुनलाई भाग्यै भए पाउली ।
यही जन्ममहाँ बढो तप गरे उस् जन्ममा आउली ।।





# दाजु पशुपतिप्रसाद भट्टराईज्यूका कविताहरू

# आमाको पुकार

नाङ्गो मानिस बस्तथ्यो विपिनको कालो गुफामा गई,
काँचो खुन पिएर जीवहरूको घुम्थ्यो पिशाचै सरि ।
मेरै मद्दतले बन्यो सहरिया दर्बारिया मानव,
बिर्सी त्यो गुन दुःखको भुमरीमा फाल्छौ मलाई अब ॥

मेरै मद्दत पाई मानव कुनै आकाशमा खेल्दछन्,
पृथ्वी छाडी बसाईं सर्न ग्रहमा, दिनरात् क्वै व्यस्त छन् ।
सुन्दैछौ परमाणुको र अणुको संघर्ष संसारमा,
यो वेला नचिनी मलाई किन हो फाल्छौ महा दुःखमा ॥

सम्पत्ति तिर दृष्टि दीकन हरे मेरो पिछा छोड्दछौ,
फाली रत्न रछानमा अब तिमी के संपति जोड्दछौ ।
के बिर्स्यौ गुण यो मलाई अहिले फाल्छौ महा गर्तमा,
आँखा खोल अगाडि हेर दुनिया काँ गो तिमी छौ कहाँ ॥

खाली हात म निस्कँदै छु युगको च्वैटा अफाली कन,
चस्का हान्छ चसक्क भित्र मुटुमा संझी बितेका दिन ।
मुर्दा जीवन भित्र धुक्धुकी थियो बाँच्ने लिई कामना,
अल्पिँदै छु निशामयी विपदको कालो महागर्तमा ॥

के सङ्कल्प भूटो थियो कि मनमा आशा थिए दुर्बल,
यद्वा स्वार्थमयी प्रपञ्च बीच नै बत्ती थियो टिल्पिल ।
किं वा ताली बजाउने समूहको मात्रै थियो खल्बल,
केले हो म त रुग्ण जीर्ण बनिदै गिर्दो छु भन् भन् तल ॥

आशाको गहिरो समुद्र तलमा मोती भरेकी थिएँ,
कैयौँ नाविकलाई तालिम दिने इच्छा गरेकी थिएँ ।
संभन्थेँ पछि चम्कने छु भवमा ज्योति बनी भल्मल,
त्यो भो व्यर्थ निसासिएँ भुमरीको नौका सरी ढल्पल ॥

के रोऊँ म अरण्य रोदन सरी को सुन्छ यो वेदना,
काहीँ छप्पर छैन भिज्छु दिनहुँ को गर्छ संवेदना ?
सारा दिक्क बने निराश्रयी बनेँ रुन्छु म एकान्तमा,
बोली द्यौ भरिलो जवानी नचढी आयो बुढ्याइँ किन ?

संभन्छौ, म प्रकाश हुँ, प्रगतिको जल्दो फिलिंगो म हुँ,
साथी हुँ सुख दुःखको र पथको उद्दीप्त तारो म हुँ ।
निम्त्यायौ अघि प्रेमले अब दुःखी पारेर के हेर्दछौ,
मैले जीवन अर्पिएँ यदि भने बेकार नै पर्दछौ ॥



# कविलाई एक सल्लाह

तिमीसँग कुनै शक्ति छैन
तिमीसँग न सत्ताको लोभ छ
न त संपत्तिको व्यामोह छ
न चाकरी गर्न जानेका छौ
झुकाउन र झुक्न पनि जानेका छैनौ ।
न माग गर्न सिकेका छौ
न त दिने नै सामर्थ्य लिएका छौ
ए निरीह कवि
ए व्यापक विचारका पोषक कवि !
ए अरूलाई बनाउन आफू तल परेका कवि
तिमीलाई मेरो हजार हजार स्वागत छ
तिमीलाई मेरो सबै अन्तर समर्पण छ
तिमी लेख्दै जाऊ, सिकाउँदै जाऊ,
रित्तिँदै जाऊ, भर्दै जाऊ,
कैल्यै आवेशमा न आऊ,
कैल्यै निरास नहोऊ,
युग तिम्रो हो, जनमानस तिम्रो हो ।
तिमी कैल्यै आफ्ना हुन सकेनौ,
न त तिमी परिवारको प्रिय हुन सक्यौ ।

तिमीलाई बाँचेसम्म कुनै वादले आफ्नू बनाउन सकेन,
तिमी तीखो बोल्छौ, घोची घोची झस्काउँछौ ।
यसैले तिमी ज्यूँदो छौ,
सूर्यभन्दा पनि टाढा जान सक्ने तिमी
हावा भन्दा पनि पातलो हुने तिमी
आकाश भन्दा पनि व्यापक हुने तिमी
तिमीलाई हजार हजार स्वागत छ ।
तिमी मरेर पनि बाँच,
तर कैल्यै पनि बाँचेर नमर,
यही मेरो शुभकामना छ ॥



# अतीतको संभ्कना

जन्मेथेँ हरियाली भित्र सुखले कोल्टे फिरेका दिन,
हुर्कें कोइली धोविनी मयुरका बच्चाहरूकै सँग ।
वर्षाको नवमेघले मयूरको भाले नचाई दिने,
संभ्काई परदेशीको मुटुभरी माया जगाई दिने ॥

जोडी ढुकुरका घुमी घुमी जहाँ नाचेर संभ्काउँछन्,
उफ्री उफ्री हरिणका छुनमुने पाठा त्यहीँ चर्दछन् ।
छन् छाँगा छहरा जहाँ मलयको हावा सधैँ चल्दछ,
नाची चौर घुमेर काफल टिपी चिभे चरी मस्त छ ।
के संभ्केर उठेँ म यो धरतीमा आकाश छोऊँ सरी,
खै ब्युभ्कैँ कि सुतेँ म यो धरतीको आकाश छामेसरी ॥



# म र मेरो माटो

हाम्रा पूर्वजका ताजा राता गाथा अनेकन,
छाती भित्र सम्हालेका सशक्त मुनिका कण ।
मुठ्ठीमा जब च्यापेर संझन्छु वीर गौरव,
लाग्छ यै देशको धर्ती माटामा पोखियौँ अब ॥

यो हो तपस्वीको माटो वेदपोषित मट्टी यो,
यहाँ छ गरिमा मेरै मैल्यै शासित देश यो ।
यो माटो माथि फैलेन छायाँ सम्म विदेशीको,
माटो मेरो सबै मेरो यो मेरो होइन भन्छ को ॥

स्वदेशी नाक चाहिन्छ माटोको गन्ध संझन,
मुटु जीवन्त चाहिन्छ माटोको गर्न रक्षण ।
तिमी मृत्तत्व भै छाउ माटो भै रमी दिन्छु म,
तिमी ज्योत्स्ना बनी आऊ माटो भै छरिइन्छु म ॥

ती काला पानीका छाती खलंगाका मुटुहरू,
टिष्टा र कांगडा हाँक्ने ओजस्वी प्रतिभाहरू ।
यसै जीवन्त माटोका ताजा धुक्धुकी हुन् सब,
कडा उत्सर्ग चाहिन्छ माटोको राख्न गौरव ॥

मेरै यहीं बनेको छ सर्वोच्च हिम पर्वत,
अत्युच्च गरिमा मेरो नपुगेको कहाँ छ र ?
यै माटो हो स्वयं स्रष्टा बुद्धत्व र शिवत्वको,
मै हु स्वतन्त्र सेनानी नेपाली शान्तिक्षेत्रको ॥



# कविताञ्जलि

घन्कन्छौ मादलु भित्र मुर्चुंगाभरि टन्न छौ,
घाँसी घँसिनी ज्यामीका पसिना सँग बग्दछौ ।
निदाएको जगत् भित्र तिमी ब्यूँझेर बोल्दछौ,
नेपाली मृत्तिका भित्र अणु झैँ तिमी टन्न छौ ।।

(१)

नागी पाखा पखेराको झुपडीभरि टन्न छौ,
आफ्नै दर्शनमा बाँच्यौ रमायौ चकमन्न छौ ।
यहाँ मुटुभरि तिम्रो तानो वात्सल्य चल्दछ,
कडोरौँ मनमा सङ्लो तिम्रै आदर्श चित्र छ ।।

(२)

अनाथ प्रतिभालाई न्यानो काख दिने तिमी,
कवि नेता कलाकार सबैका अगुवा तिमी ।
करोडौँ मुटुमा तिम्रै तातो धड्कन चल्दछ,
कडोरौँ नेत्रबिन्दुमा तिम्रै आदर्श चित्र छ ।।

(३)

फेवा राराभरि सिंगो तिम्रै माया छ सञ्चित,
उषाको लालिमा तिम्रो हाँसो झैँ नित्य लाग्दछ ।।

(४)

काव्यको मूल सिञ्चेर कल्पवृक्ष बनाउने,
नयाँ जागृतिका निम्ति क्रियाशील सधैँ हुने ।
स्वयं बनेर सेनानी विकासतिर लम्कने,
उपमै छैन मेधावी तिमीलाई सुहाउने ॥
(५)
जस्तै कठिन होस् काम विचलित नभै दिने,
समस्या जति नै आउन् धैर्य साथ सम्हालने ।
सिन्धु झैँ गहिरो छाती एकान्तप्रिय चिन्तक,
उपमै छैन मेधावी तिमी बाहेक सुन्दर ॥
(६)
रचनाकाल : २०३८।११।१६



# श्रद्धाञ्जलि

कत्रो आश लिएर हामी दुइटै लाई पढाउनु भो,
हाम्रै निम्ति कडा परिश्रम गरी आशा बढाउनू भो ।
भाक्नुभो कुल देवता कति कति हाम्रो सुयश् गाउन,
बाबा जानु भयो नबोली गहका आंसू बगाईकन ॥
(१)

जाडो गर्मी र भोक प्यास नभनी हर्दम् परिश्रम गरी,
जो जुर्थ्यो घरमा मीठो अनि पिठो सानन्द भोजन् गरी ।
हामीलाइ सुखी बनाउन सदा आफू दुःखी भैकन,
बाबा जानु भयो नबोली गहका आँसू बगाईकन ॥
(२)

दौडेथेँ मुख हेर्न पाउँछु भनी कत्रो ठूलो आशले,
मीठा आशिष वाणी सुन्न र कुनै अर्ति लिने प्यासले ।
पाएँ दर्शन, किन्तु सौम्य मुखको वाणी लुकाईकन,
बाबा जानु भयो नबोली गहका आँसू बगाईकन ॥
(३)

पापी पेट भरिन्नथ्यो सँग बसौँ टाढा हुँदा दुःख भो,
दौडी आफु पुगे पनि तर सधैँ टाढै हुने कर्म यो ।
इच्छा के छ भनेर सोधुँ कहिले ? यस्तै थियो चिन्तन,
बाबा जानु भयो नबोली गहका आँसू बगाईकन ॥
(४)

आ बाबु सँगमै बसौँ अब गर्लें देखिन्न आँखा पनि,
इच्छा मात्र छ शक्तिहीन तनमा बेकार भो जीवनी ।
टाढा छौ तिमीहेरु अन्त्य नटुटोस् बिन्ती छ यै दिन् दिन,
भन्दै जानुभयो अनन्त पथमा केही नबोली कन ॥

(५)

जो सङ्घर्ष गरी उठाउनु भयो आफ्नो उचो मस्तक,
कस्तो निर्भिक छाती वज्र सरीको डर्दैनथ्यो क्वै सित ।
सारा वेद पुराण ज्योतिष कला मर्मज्ञ त्यो जीवन,
अल्प्यो जानु भयो अनन्त पथमा केही नबोलीकन ॥

(६)

जिज्ञासा मनमा लिई जनहरू जान्थे पूरा गर्दिने,
कत्रो साहस सत्यको विजयमा एक्लै अघि सर्दिने ।
शत्रु मित्र समान शुद्ध मन त्यो सारै थियो पावन,
बाबा जानुभयो नबोली गहका आँसू बगाईकन ॥

(७)

जस्तै पीर गरे पनि गइसक्यौ कैले नफिर्ने गरी,
कस्तो चञ्चल जिन्दगी छ बिजुली चम्की हराए सरी ।
हामीले त्रुटि जे गऱ्यौँ अबुझ भै छोडी सबै चिन्तन,
बाबा आशिष देऊ जीवन भरी सन्तान संझीकन ॥

(८)

तिम्रो मर्म बुझिन्नथ्यो अलिकति चाँडै रिसाई दिने,
तिम्रो धर्म  थियो सनातन सधैँ हिन्दुत्व झल्काउने ।

तिम्रो गर्व थियो सुपुत्रहरूको गर्ने सदा चिन्तन,
बाबा जानुभयो अनन्तपथमा केही नबोलीकन ॥
(९)

आमा जानुभयो सह्यौँ दुःख सबै बाबा सँगै छौँ भनी,
संझायौ कति धैर्यले मुटु सधैँ चर्केर आए पनि ।
रुन्थ्यो चित्त तथापि आँसु गहमा कैल्यै नल्याईकन,
बाबा जानुभयो अनन्तपथमा केही नबोलीकन ॥
(१०)

आफू कत्ति नखाई दुःख सहँदै चारो चुचोमा लिई,
दौडन्छन् जसरी चरा ती विचरा बच्चाहरू संभिmई ।
त्यस्तै जन्मभरि कडा दुःख गरी हाम्रै गरी चिन्तन,
बाबा जानुभयो अनन्तपथमा केही नबोलीकन ॥
(११)

छोरा नाति पनाति उन्नति गरून् यस्तै दिई आशिष,
कीर्ति पूर्वजका चलाउन सकून् गर्दै सधैँ कोसिस ।
हर्दम रामचरित्र गाई सबमा सम्झाई रामायण,
बाबा जानुभयो अनन्तपथमा केही नबोलीकन ॥
(१२)



# राजा वीरेन्द्रप्रति

छैनौ राज अब धरतीमा सत्य यो सत्य नै हो,
छाएका छौ मुटुभरी तिमी यो पनि सत्य नै हो ।
कस्ता कस्ता दुःखहरू सह्यौ यो पनि सत्य नै हो,
छैनौ भन्नै किन नसकिने सत्य यो हो कि त्यो हो ॥

यात्री बन्दै कति कति हिँड्यौ रानीले साथ दिन्थिन्,
चोखो मीठो अलिकति सदा रानीले पस्की दिन्थिन् ।
जान्थ्यौ टाढा कति दिन तिमी रानीले साथ दिन्थिन्,
तिम्री रानी अब तिमी सँगै साथमा स्वर्ग जान्छिन् ॥

तिम्रो भन्ने अब धरतीमा बाँकी नै के रह्यो र,
आफ्ना भन्ने सब लगिदियौ बाँकी के नै रह्यो र ।
तिम्रो छोरो अब छ टुहुरो यो प्रजातन्त्र नानी,
माथिबाटै घरी घरी तिमी छर्कनु प्रेम पानी ।
हामी सारा व्यथित दिलका शोकमा यी धरा छन्,
राजा ! जाऊ जति पर तिमी बाडुली नित्य चल्छन् ॥



# वर्तमानको त्रिवेणी बनौँ

म – मधेशको वासमती चामल
मालदह आँप सँगै
बन्न नसकेको नागरिकता र
भोग्न नपाएको समानता
लिएर आउँदै छु ।

तिमी – हिमाली भेगको चौँरीको ताजा घ्यू
अलिकति जिम्मु र छुर्पीसँगै
बाटाको अभाव चामलको भोक र
नुन चिनीको लामो प्रतीक्षा बोकी
तल पहाडको बिसौनीमा झर ।

त्यहाँ – एउटै स्तनपान गरी हुर्केको
हाम्रो पहाडी भाइ
वरपीपलको चौतारमा
नुनको ढाकर बिसाई
नाम्लाको डाम र खकनको ठेला छाम्दै
टोपीले पसिना पुछेर ढिँडो र गुन्द्रुक उमाल्दै
हाम्रो बाटो हेर्दै होला
जाऔँ छिटै त्यस चौतारीमा
वरपीपल साक्षी राखी
कहिल्यै नछुट्टिने प्रतिज्ञा गरौँ ।
हाम्रा सबै आग्रह पूर्वाग्रह त्यागी
वर्तमानका त्रिवेणी बनौँ ।



# माता

लामीडाँडा धवल हिमका शैलले घेरिएको,
खोलानाला सघन वनका पङ्क्तिले बेरिएको ।
बग्छिन् छ्यौमै हिमजल नदी दूधकी दूधकोसी,
आमालेझैँ मधुर पयले नित्य सन्तान पोसी ।।
(१)
मेरा पुर्खा अलि पर दुभे गाउँ छोडेर आई,
लामीडाँडा समथर थलो बीच बस्थे रमाई ।
राम्रो ब्रह्मस्थल अघि थियो मानसम्मान पाई,
बस्थे सारा मिलजुल गरी साथमा भट्टराई ।।
(२)
आफ्नै आफ्ना वरपर थिए शुद्ध सोझो समाज,
गर्थ्यो होला ! त्यस समयमा सत्य सद्धर्म राज ।
लामीडाँडा सुसदन थियो शान्तिधामै समान,
बाबा आए त्यस सदनमा धर्मदत्ताभिधान ।।
(३)
रावा खोला तुहिनतनया छेउमा बस्छ गाउँ,
सुन्ना साथै मन खुस हुने बाक्सिला रम्य ठाउँ ।
बस्थे सोही जमिनतलमा वृद्ध दाहालवंश,
जन्मिन् सोही विमल कुलमा रन्धता ब्रह्मअंश ।।
(४)

सानैमा नै वर अति गुणी स्वस्थ खोजी जुराई,
खेल्दाखेल्दै परिणय भयो होस राम्रो नपाई ।
प्यारो आफ्नू मधुर अति नै माइतीदेश छोडी,
लामीडाँडा पतिघर गइन् नव्य सम्बन्ध जोडी ॥

(५)

आइन् नौली प्रथम दुलही दीपजस्तै बनेर,
आए घेरे स्वजन सबले हेर्नलाई भनेर ।
राखिन् गोडा जब जमिनमा लाजले बेहुलीले,
आए घेरे नियत विधिले आरती सेउलीले ॥

(६)

आइन् ब्यौली पतिघर जहाँ मात्र यौटी नवीना,
बन्नैपर्थ्यो सकल घरको कामगर्दै प्रवीणा ।
बिस्तारै नै गृहविषयका काममा चित्त लाई,
आमा साँच्चै कुशल गृहिणी बन्नुभो चाल पाई ॥

(७)

जे जे पर्थे प्रतिदिन हुने काम आफ्ना घरैमा,
गर्ने गर्थिन् तनमन दिई राम सम्झी मनैमा ।
सोझीसाध्वी सरल मनकी स्वार्थ केही नराखी,
मेरी आमा सफल गृहिणी बन्नुभो नाम राखी ॥

(८)

हेर्दाहेर्दै दिन र महिना वर्ष धेरै बितेछन्,
छोराछोरी दश हुन गई चाहिँदा जन्मिएछन् ।
सानैमा नै खल नियतिले पाँच सन्तानलाई,
सोभ्कै तान्यो अमरपुरमा थाहपत्तै नपाई ॥
(९)

छोप्तै ल्याए दिनकुदिनले घामछाया बनेर,
घोच्ने गर्थ्यो अनि कुदिनले शूल जस्तै बनेर ।
छोराछोरी जति पनि गए शोकले घेरिइन् ती,
मेरी आमा कम समयमा देखिइन् रुग्ण जस्ती ॥
(१०)

माया गर्थिन् हरतरहले नित्य सन्तानलाई,
गर्थिन् सेवा स्वजनसबको नित्य हाँस्तै रमाई ।
ठूला पारिन् समयसँग नै चल्नसक्ने बनाई,
पोखिन् आफ्नो रगतपसिना वंशउत्थानलाई ॥
(११)

जे जे पर्थे शुभ अशुभ या धर्म वा कर्म गर्दा,
साथै हुन्थे पति पनि सधैँ दुःख या कष्ट पर्दा ।
हेर्दाहेर्दै पतिसहित नै जालले जेलिए ती,
साँच्चै लाग्थ्यो हलचल नभै दम्पती बाँधिए ती ॥
(१२)

पर्दा केही सकस घरमा छेक्तथिन् ढाललेझैँ,
रक्षा गर्थिन् अबल शिशुको गर्जिंदै सिंहिनीझैँ ।
माया गर्थे पति पनि सधैँ मान्दथे ती सतीझैँ,
देखिन्थिन् ती यमनियमले खारिएकी व्रतीझैँ ॥
(१३)
कैले खेती अनि त कहिले लेकबेँसी गरेर,
फर्किन्थिन् ती घर अति ढिलो काममा जोतिएर ।
छोराछोरी दिनभरि भुली काम गर्दै हराई,
माया गर्थिन् वनवनचरी नीडमा राति आई ॥
(१४)
चढ्थेँ अग्ला रुखहुँदि म ता फुर्किंदै जम्जमाई,
आमा भन्थिन् किन रुख चढिस् ? दुःख होला तँलाई ।
आमा भन्थिन् रुख मुनि बसी झर्न चाँडो मुल्याहा,
आँखा हेरी टुलुटुलु कठै ! पीर मानी अथाहा ॥
(१५)
कैले कैले घरचलनमा पर्न जाँदा अभाव,
आमालाई अलिअलि कहीँ पर्न जान्थ्यो प्रभाव ।
जे होस् आमा तर पनि कसै दुःख किञ्चित् नमानी,
गर्दै जान्थिन् विधिवश सबै पूर्वको कर्म ठानी ॥
(१६)

आमा सारै सरल मनकी धर्मकी मूर्तिजस्ती,
सङ्ली सोझी सलल बहने जाह्नवीमूलजस्ती ।
आमा साध्वी पति अभिमुखी सूर्यकी फूलजस्ती,
वर्षा गर्ने अमृत सबमा रातकी जूनजस्ती ॥
(१७)
मेरी आमा सरल मनकी स्वच्छ सद्भावजस्ती,
देख्ता लाग्थ्यो तन र मनमा दुःख नै छैनजस्ती ।
जल्ले जे जे जति पनि भनून् रोष नै छैनजस्ती,
बुझ्दाबुझ्दै बुझिनसकिने मौनसन्तोषजस्ती ॥
(१८)
पूजाआजा व्रत र जपमा बित्न गै धेर बार,
आमाको त्यो अतल मनको नासियो अन्धकार ।
गर्ने गर्थिन् हरतरहले धर्मकर्मादि धेर,
गर्दागर्दै सब दिन बिते सद्व्रती नै बनेर ॥
(१९)
छोडी आफ्नो घर पर भए पुत्र ती पढ्नलाई,
आमालाई अति सकस भो शान्तिले बस्नलाई ।
सम्झीसम्झी तरल मनले आँसु भित्रै बगाई,
आमा रुन्थिन् सुतविरहमा कौशिकीझैँ सुसाई ॥
(२०)

कैले बस्थिन् अविचल उनी रातमा दीप बाली,
सम्भिन्थिन् ती हरबखत नै मात्र सन्तान खालि ।
इच्छा गर्थिन् प्रतिदिन उनी धर्मकर्मादि गर्न,
राख्थिन् इच्छा सब किसिमले पुत्रकल्याण गर्न ॥

(२१)

कल्ले बुझ्ने जलन मनको जल्छ भित्रै सुसाई,
कल्ले देख्ने व्रण हृदयको बग्छ भित्रै रसाई ।
कल्ले बुझ्ने कति छ मनमा ज्वारभाटा उठेको,
कल्ले हेर्ने नयन दुइटै दूधकोसी बनेको ॥

(२२)

सल्लाघारी सरसर गरी भित्र छोए समान,
लाग्थ्यो होला प्रकृति सब नै घुँक्क रोए समान ।
लाग्थ्यो होला वरिपरि सबै सिर्जना नै अँधेरो,
मेरी आमा व्यथित अति भै देख्नुहुन्थ्यो अँधेरो ॥

(२३)

आमा सोध्थिन् पतिसँग सधैँ पत्र आए कि ? भन्दै,
बाटो हेर्थिन् प्रतिदिन कठै पुत्र आए कि ! भन्दै ।
कैलेकैले हिकहिक हुँदा बाडुली नै चलेर,
आमा रुन्थिन् तब तनयले सम्भिएछन् भनेर ॥

(२४)

सम्झीसम्झी तनयतनया रात हुन्थे कि ? लामा,
बिर्सुन् यद्वा तर पनि कठै बिर्सिदैनन् कि ? आमा ।
मीठो पाके पनि त घरमा ती सधैँ सम्झिएर,
आमा रुन्थिन् व्यथित अति भै न्याउलीझैँ भएर ॥
(२५)
घुम्दैफिर्दै नियमित सधैँ आउँथे चाडबाड,
आमा रुन्थिन् तनय नहुँदा सम्झँदै भै उजाड ।
आए छोरा यदि घर भने हाँस्तथिन् फूल जस्ती,
चम्किन्थिन् ती चमचम गरी रातकी जून जस्ती ॥
(२६)
राती सुत्ता पनि त सपनी देखिए क्यै नराम्रो,
आमालाई छटपट भई डाह हुन्थ्यो नराम्रो ।
झस्की उठ्थिन् झटपट गरी रातमै आत्तिएर,
गर्थिन् पूजा वरपिपलको ती सखारै गएर ॥
(२७)
बाटो हेर्थिन् अब सुतहरू आउने हुन् कि ? भन्दै,
आमाका हा ! कति दिन बिते मासवर्षादि गन्दै ।
लाग्थ्यो वर्षा अनि त मनमा आस जान्थ्यो मरेर,
खोलानाला विकट भलले छेक्छ बाटो भनेर ॥
(२८)

आमा रुन्थिन् सुतविरहमा आँसु झारी हजार,
बाछो छुट्‌ता धुरु धुरु रुने धेनुझैँ बारबार ।
हाँसेजस्ती सतह तहमा भित्र आँधी हजार,
कल्ले बुझ्ने विरह मनको फुट्‌छ जो बारबार ॥
(२९)

शिक्षादीक्षा जब सब सकी पुत्र जागीर खाई,
बढ्‌दैचढ्‌दै परपर पुगे मानसम्मान पाई ।
जान्थे छोरा जति जति उँभो हाँस्दथिन् हर्ष मानी,
आफ्ना सारा जप र तपको प्राप्ति नै हो कि ? ठानी ॥
(३०)

छोरा जान्छन् अति निठुर भै दूर ती मस्त बन्दै,
आफ्नै पत्नी तनयतनयामात्रमा स्नेह गर्दै ।
आमा रुन्छिन् प्रतिपल कठै सम्झँदै दुःख मानी,
माया लान्छे तल तल सधैँ छालले छाल तानी ॥
(३१)

जान्छन् सोझै जल र ममता बग्दछन् ती अगाडि,
साँच्चै नै हो प्रकृति तिनको फर्कंदैनन् पछाडि ।
फर्के नै वा यदि पछि भने बन्छ यद्वा विकार,
भन्ने सम्झी चुप भइरहिन् आउँदा सद्‌विचार ॥
(३२)

आमा ओर्लिन् तल सुनसरी धर्मका साथ लागी,
जल्ले गर्दा विरह मनको जो गयो दूर भागी ।
छोराछोरी हरसमय नै आउँथे भेट्नलाई,
आमा बन्थिन् अतिशय खुसी दुःख सारा हराई ॥
(३३)

बस्ता बस्तै सब दिन बिते दीर्घ छाया खसाली,
घेर्दै ल्याए परिजन बढी मोहमाया बसाली ।
आए छोपे सबतिर बसी नातिनीनातिनाले,
बूढ्यौलीको अनुभव भयो शक्ति नै घट्दिनाले ॥
(३४)

आमालाई अलिअलि गरी हिँड्न गाह्रो हुँदै गो,
पूजाआजा जप र तपमा धेर आस्था हुँदै गो ।
सक्तैमा नै जति पनि गरिन् दूर तीर्थादि यात्रा,
आमालाई क्रमसँग भयो आँगनै कष्टयात्रा ॥
(३५)

बेरामी भै हलनचल ती बन्दथिन् बारबार,
चल्दै जान्थ्यो हरतरहले नित्य स्वास्थ्योपचार ।
छोराछोरी पति पनि मिली गर्दथे हेरचाह,
आमालाई कति दिन कठै ! हुन्नथ्यो कत्ति थाह ॥
(३६)

यस्तै धेरै दिन र महिना वर्ष ती बित्न थाले,
आमालाई अति दुःख भयो जीर्णरोगी हुनाले ।
छोराछोरी परिजनहरू आँसु झारी नराम्रो,
रुन्थे भन्थे कुन नियतिले रोग लाग्यो नराम्रो ॥
(३७)

आमा खोज्थिन् तनयतनया सम्झँदै व्यग्रताले,
गर्थिन् सारै छटपट उनी कष्टले भावनाले ।
छोरा सेवारत पर हुँदा बस्न लामो बिदामा,
गाह्रो हुन्थ्यो तर पनि सधैँ आउँथे सम्झँदामा ॥
(३८)

सेवा गर्थे तन र मनले रोग साह्रो हुँदै गो,
आमालाई अनि त तन नै धान्न गाह्रो हुँदै गो ।
बिस्तारै नै अलिअलि गरी रोगले सुस्त पारी,
सुत्नै बस्नै अति कठिन भो उठ्न भो कष्ट भारी ॥
(३९)

सुत्तासुत्तै सकल जिउमा उब्जिए धेर घाउ,
लाग्थ्यो साँच्चै शरशयनका भीष्मका हुन् कि ! घाउ ।
दुख्थ्यो सारा चरचर गरी घाउ झन् चर्किएर,
पर्थिन् मूर्छा अतिशय भई हेर्दथिन् झस्किएर ॥
(४०)

जानैपर्ने नियत दिनमा जो छ दैवी व्यवस्था,
आमालाई सब सुझ्फ थियो आउँदा त्यो अवस्था ।
जानीजानी सब सहिरहिन् देहमा कष्ट पाली,
जप्थिन् भित्रै मनमन सधैँ रामको नाम खालि ॥

(४१)

देख्थिन् दुःखी जन जब उनी आर्त्तिँदै दुःख मानी,
गर्थिन् सेवा हरतरहले मुख्य कर्तव्य ठानी ।
हिंसा यद्वा पर अहितका काम देखे सदैव,
रोक्ने गर्थिन् खुद अघि सरी ढाल बन्दै सदैव ॥

(४२)

गर्दै आइन् जनमभर नै धेर राम्रा सुकार्य,
गर्थ्यौ जल्ले परहित हुने पुण्यदानादि कार्य ।
जल्ले ठानिन् सुकृत कृत नै अन्त्यमा जान्छ साथ,
त्यस्तीलाई तकलिफ दियौ दैव ! पारी अनाथ ॥

(४३)

हाँस्थिन् पैले अनवरत जो धर्मलाई अँगाली,
रुन्छिन् ऐले विवश बिचरी मृत्युलाई अँगाली ।
कैले हाँसो रुदन कहिले देखिने घामछाया,
मिथ्या हो यो क्षणिक दुनियाँ जिन्दगी रामछाया ॥

(४४)

आमाको त्यो सरल मनको जो थियो कृत्यकार्य,
इच्छा जस्तै सब गरिदिए अन्त्यदानादि कार्य ।
हेर्दाहेर्दै स्वजन सबले कालले टप्प आई,
आमालाई पर लगिदियो ब्रह्ममा नै मिलाई ॥
(४५)

आए रोए परिजनहरू वज्र नै वज्रिनाले,
पारी सारा स्वजन टुहुरा रन्धता हिड्दिनाले ।
यस्तैमा नै झटपट गएँ आत्तिदै हेर्नलाई,
आमा भेट्ने अतल मनमा भावना खूब आई ॥
(४६)

जाँदाजाँदै खल समयले निर्दयी नै भएर,
चाँडै स्वाहा शव गरिदियो घाटमा नै लगेर ।
आमाको त्यो खपिनसकिने शोकलाई दबाई,
आफ्नू गर्ने सब गरिरहेँ आँसु भित्रै लुकाई ॥
(४७)

पूरा गर्दै क्रमसँग सबै औद्र्ध्वदेहादि कार्य,
गर्नैपर्ने सब गरिदियौँ पुण्यदानादि कार्य ।
श्रद्धा राखी विधि सब गरी पूर्ण तेह्रौँ बिताई,
आमालाई परिजन रुँदै गर्दियौँ हा ! बिदाइ ॥
(४८)

आमाको त्यो जनमभरको जो थियो एक इच्छा,
स्यूँदोमा नै सिँदुर रहँदै मुक्त बन्ने सदिच्छा ।
इच्छा जस्तो जुन पनि थियो त्यो भयो पूर्ण सारा,
आमा जाँदा तनयतनया आज छौँ बेसहारा ॥
(४९)
सोभ्कीसाध्वी यमनियमले शुद्ध नै पारिएकी,
आफ्ना सारा व्रत र तपले स्वर्णभ्कैँ खारिएकी ।
माया गर्ने चरअचरमा शुद्ध खानी दयाकी,
आमा लाग्थिन् भ्कलमल सधैँ मूर्ति सद्भावनाकी ॥
(५०)
मेरी आमा जुन दिन गइन् बर्सियो रात सारा,
कामिन् धर्ती डगमग भई छोपिए जून तारा ।
भत्के कैयौँ घर र भ्कुपडी पूर्व नेपाल थर्क्यो,
धेरै ठूलो क्षति हुन गयो राष्ट्रको भाग्य चर्क्यो ॥
(५१)
आमालाई सहज लिन वा यान वैकुण्ठबाट,
आयो होला ! अनि त पृथिवी थर्किइन् यानबाट ।
कामिन् धर्ती थरथर गरी भूमिचालो गएर,
थर्क्यो चर्क्यो जमिन सहसा क्षुब्ध साह्रै भएर ॥
(५२)

मेरी आमा सरल मनकी जो थिइन् पुण्यखानी,
जाँदा छोडी सहज धरती पोखिइन् दुःख मानी ।
धर्ती छोडिन् जब त उनले हल्लियो पूर्व सारा,
लाग्थ्यो साँच्चै सकल सकियो जिन्दगीको सहारा ॥

(५३)

मेरी आमा सजल नयना कष्ट भित्रै लुकाई,
पग्ले जस्ती अलिअलि गरी हाडछाला सुकाई ।
घोटी घोटी अवयव सबै सम्झी सन्तान खालि,
बाँड्थिन् आमा मधुर ममता भित्र वात्सल्य पाली ॥

(५४)

आमाको त्यो अतल मनको भित्रको भाव डाकी,
बोल्थ्यो माया अविचल सधैँ अङ्ग सम्पूर्ण ढाकी ।
हेर्दाहेर्दै फुरफुर गरी नाच्तथे अङ्ग सारा,
आमाका ती अवयव सबै बन्दथे स्नेहधारा ॥

(५५)

आमाको नै मधुर ममता पाउँदा नित्य साथ,
हुन्थे पैले अब गइसकिन् ठान्छु सारै अनाथ ।
ऐले मैले तममय सबै देख्छु निस्पट्ट कालो,
हेर्दाहेर्दै अब त जगतै देख्न थालेँ म कालो ॥

(५६)

मेरा बाबा विकल बहुतै अङ्ग आधा गुमाई,
बिर्सी सारा परिजनहरू थाहसुद्धी नपाई ।
बाठा, शूरा, सबल, चतुरा, साहसी व्यक्तिलाई,
सिट्ठा पाऱ्यो अलिअलि गरी शोकले नै सुकाई ॥
(५७)

हेर्दाहेर्दै कम समयमै काल फर्केर आई,
बाबालाई पनि लगिदियो थाहपत्तै नपाई ।
छोराछोरी परिजन सबै एकसाथै रुवाई,
सोझै तान्यो खल नियतिले दम्पती युग्मलाई ॥
(५८)

टीकाटाला शुभ विजयका चाड द्यौसीतिहार,
घुम्दैफिर्दै शुभ दिनहरू आउँथे बारबार ।
कैले पर्थे परिणयहरू धर्मकर्मादि कार्य,
कैले पर्थे उपनयन वा देवपूजा सुकार्य ॥
(५९)

जान्थ्यौँ हामी घुमफिर गरी भेट्न बाबा र आमा,
बन्थ्यो सारा घर रिमिझिमी पुग्दथ्यो पूर्णतामा ।
भेला हुन्थ्यौँ तनयतनया बन्दथ्यो पुण्यधाम,
बन्थे हाम्रा जनकजननी माझमा जूनघाम ॥
(६०)

सम्झी सम्झी जनकजननी प्रातमा नित्य जाई,
उक्ली ठाडो क्रमसँग सिँढी शम्भुका सामु आई ।
पोखौँ भन्दै विरह मनको गर्दथेँ सत्प्रयास,
सम्झी सम्झी क्षणिक सब यो बन्दथेँ झन् उदास ॥
(६१)

हेर्दै सारा पशुपति नदी वाग्मती आर्यघाट,
घुम्ने गर्थें प्रतिदिन गई नित्य आवासबाट ।
मर्छन् जल्छन् जुन शव भई खाइँदा कालबाट,
जान्छन् यद्वा सब शिवपुरी मृत्युको लोकबाट ॥
(६२)

जो जो जल्थे जति पनि सबै वृद्ध वृद्धा जवान,
आफ्ना ठान्थेँ किन किन म ता बाबुआमा समान ।
बाबा आमा सकल यसरी घाटमा नै जलाई,
मैले आफ्ना प्रियजन गरेँ घाटबाटै बिदाइ ॥
(६३)

रुन्छौँ छातीभरि विरह ली जान्छ जो रोकिँदैन,
बस्नेलाई विरह छ सधैँ चल्छ जो रोकिँदैन ।
मर्नैपर्ने नियति सबको हुन्छ जो रोकिँदैन,
भन्ने सम्झी विरह मनको रोक्छु जो रोकिँदैन ॥
(६४)

हामीभन्दा जनकजननी दूर धेरै भएछौ,
कैल्यै भेटै हुन नसकिने ठाउँमा जो गएछौ ।
छोड्यौ चाँडै उऋण नहुँदै गर्न केही नपाई,
राख्यौ भारा तिरिनसकिने दूधको पुत्रलाई ॥
(६५)

आमा आऊ सहज सपनी बीचमा माथिबाट,
बिस्तारै नै मधुर ममतापूर्ण राखेर हात ।
मेरो सारै विकल मनमा शान्तिको लेप लाऊ,
हाँस्तै आऊ पलभर यहाँ सुस्त चालेर पाउ ॥
(६६)

जानै पर्ने नियति सबको टार्न नै सक्छ कल्ले,
लेख्यो जस्को जति पनि कुरा भोग्नु नै पर्छ उल्ले ।
यी हुन् सारा सतहतहका ज्ञान यो बुझ्छ कल्ले ?
आफैँलाई जब परिगयो ज्ञान यो दिन्छ कल्ले ?
(६७)

लेख्तालेख्तै भलभल हुँदै नेत्रमा आँसु आई,
तान्यो सोझै तलतल कठै ! भावनाले बगाई ।
आयो बाढी भल भल भई धैर्यको बाँध फारी,
रोयो मेरो कलम बिचरो मैसरी आँसु झारी ॥
(६८)

पोखेँ मैले विरह मनको वाग्मती छेउ आई,
बग्थे मेरा नयन दुइटै वाग्मतीझैँ रसाई ।
फुल्थे श्रद्धा सुमन मनका नित्य नै भावनाका,
चल्थे यद्वा हिकहिक गरी बाडुली सम्झनाका ॥
(६९)

मिल्लान् थुप्रै परिजनहरू मिल्छ सत्कीर्तिसार,
मिल्दैनन् ती जनकजननी फर्किंदै बारबार ।
भन्ने सम्झी दहरतलको शुद्ध सद्भाव सारा,
मैले अर्पें जनकजननी युग्ममा अश्रुधारा ॥
(७०)

श्रद्धा राखी अतिशय बसी छेउमा वाग्मतीको,
मैले पोखेँ सहज मनको भावना सद्व्रतीको ।
यो हो मेरो व्यथित मनको पत्रपुष्पार्चनादि,
लेउन् जानी जनकजननी श्राद्ध वा तर्पणादि ॥
(७१)

– वन्दनाबाट



# पिता

मेरा पुर्खा अघि अघि बढी गोरखाबाट पूर्व,
सिन्धू सालू क्रमसँग पुगे पाइ बिर्ता अपूर्व ।
रावा दूबे त्यसपछि गई एक बिर्ता किनेर,
बस्ने गर्थे त्यस जमिनमा प्राप्तिका साथ धेर ॥

(१)

केही छोटो समयपछि नै फेरि रावा तरेर,
लामीडाँडातिर अघि बढे वास सर्ने भनेर ।
पाए राम्रो समथल थलो बन्धुको माझ खास,
आनन्दी भै सुखसँग बसे प्राप्त भै सन्निवास ॥

(२)

सेतो अग्लो हिमशिखरले नित्य छर्थ्यो प्रकाश,
लाग्थ्यो साँच्चै धवल अति नै शम्भुको अट्टहास ।
रावा कोसी मृदु जल पिई स्वच्छ ताजा बतास,
गर्ने गर्थे सघन वनका बीचमा नै निवास ॥

(३)

लामीडाँडा झलमल सधैँ उच्च डाँडो हुनाले,
लामीडाँडा गहन अति नै वृक्ष बाक्ला हुनाले ।
लामीडाँडा शिवतर सधैँ ब्रह्मवस्ती हुनाले,
लामीडाँडा प्रियतर निकै लेकबेसी हुनाले ॥

(४)

सोही राम्रो शुभ जमिनमा पूर्वको कर्मबाट,
जन्मे बाबा सुदिनतिथिमा धर्मका नामबाट ।
बाबाभन्दा अघि पनि थिए ज्येष्ठ बाबा स्व एक,
जन्मे बाबा पछि पनि अरू भाइ बैनी अनेक ॥

(५)

बाबाभन्दा पछि कुल भए माहिला भाइ जान,
जन्मे अर्का अनुज सबमा कान्त चन्द्राभिधान ।
कान्छा चाँडै परमपदको पान्थ भै हिँड्दिनाले,
बाबा साह्रै व्यथित हुनुभो चन्द्र जो अल्पिनाले ॥

(६)

कान्छी काकी विवश विधवा सत्यमा नै रहेर,
काटिन् सारा दिन र रजनी दुःख साह्रै सहेर ।
हाम्री आमा सँगसँग रही धर्मकर्मादि गर्दै,
लागिन् टाढा अमरपुरका तर्फ संसार तर्दै ॥

(७)

मेरा बाबा विवश टुहुरो बन्नुभो बालकैमा,
आयो सारा गहन घरको भार सानै हुँदामा ।
ज्यामैसाथै अनुज बहिनी औ फुपू बाललाई,
पाल्दै पोस्दै अघि अघि बढे दुःख अत्यन्त पाई ॥

(८)

पैले आफ्नो परिणय भयो बाक्सिलामा गएर,
आइन् नौली प्रथम दुलही दीपजस्तै भएर ।
गर्दागर्दै अनुज बहिनी आदिको हेरचाह,
बिस्तारै नै क्रमसित गरे ती सबैको विवाह ॥
(९)

यस्तैमा नै छुटपुट भई माहिला भाइ खास,
गर्नेगर्थे स्वगृह तलको गेहमा गै निवास ।
आफ्ना आफ्ना नियतिवश भै कर्मका साथ लागी,
बढ्दै जाँदा कति पर पुगे क्वै बसे क्यै नलागी ॥
(१०)

छोराछोरी जति पनि भए अर्ध पारेर भागे,
बाँचे जो जो अलिअलि गरी ती सबै दूर लागे ।
बाबा एक्लै लडभिड गरी पर्दथे काम जे जे,
मेरा बाबा अघि बढिरहे भाग्यले नै दियो जे ॥
(११)

खेतीपाती घर र परको जे सुकै काम गर्न,
बाबा साह्रै सुदृढ मनको जे परोस् सो बिहोर्न ।
डोका डाला सुकुल घुम जो बुन्नमा खूब दैव,
नाम्लादाम्ला पनि सहजमा बाट्नुहुन्थ्यो सदैव ॥
(१२)

चिन्हा पात्रो जनमगणना कुण्डली वैद्यकाम,
पूजाआजा विविध विधि जो जान्नुहुन्थ्यो तमाम ।
मेरा बाबा सहज गतिले भन्नुहुन्थ्यो पुराण,
जे चाहिन्थे सकल मुखमै बस्तथे सत्प्रमाण ।।

(१३)

धामी झाँक्री विविध गुणका ओखती झारफूक,
गर्दाखेरिन् सकल जनमा बन्न जान्थे अचूक ।।
मेरा बाबा सहज सबमा ज्ञान राखेर खास,
सेवा गर्दै सकल जनमा गर्नुहुन्थ्यो निवास ।।

(१४)

छोरा लागे जब पर दुवै दिक्क लागेर आई,
मेरा बाबा झटपट झरे सुन्सरीमा बसाइ ।
मेरी आमा स्वजन जति छन् बासँगै साथ आए,
लामीडाँडा सकल खनियो सुन्सरीमै रमाए ।।

(१५)

मेरा बाबा अविचल भई गर्दथे कामकाज,
बाबाको नै वरिपरि सधैँ घुम्न जान्थ्यो समाज ।
मेरा बाबा निडर अति नै न्यायका मूर्तिजस्ता,
मर्दा पर्दा स्वजन सबका ओतिने वृक्ष जस्ता ।।

(१६)

चाहे आओस् कुदिन अथवा धेर ऐश्वर्य आओस्,
चाहे वैरी वरिपरि हउन् या त सर्वस्व जाओस् ।
जस्तै जेहोस् तर पनि पिता धैर्य आफ्नो नछोडी,
बढ्दै जान्थे अविचल सधैँ मृत्युसंत्रास तोडी ॥
(१७)

आफ्नो प्यारो जनमधरती स्वच्छ पानी बतास,
छोडी झर्दा जनकजननी बन्दथे वा उदास ।
जेहोस् आफ्नै वरपर थिए गाउँकै सानमान,
देख्दा लाग्थ्यो सकल सहजै लामिडाँडै समान ॥
(१८)

बाबा सारै दृढ मति भई जे परुन् कामकाज,
गर्ने गर्थे अघि पछि लिई स्वच्छ सारा समाज ।
बाबा बूढो जति हुनुभयो तिर्सना दूर भाग्यो,
पैलेको त्यो गतिविधि कठै ! सुस्तरी दूर लाग्यो ॥
(१९)

पैले बाबा मन अति दिई काममा चाख राखी,
गर्नेगर्थे सकल घरको काम बाँकी नराखी ।
बिस्तारै नै जनक सबमा मोह छोडेर खास,
बस्ने गर्थे स्थितमतिसरी भै सबैमा उदास ॥
(२०)

आमालाई जब नियतिले ब्रह्ममा लीन पाऱ्यो,
बाबालाई तब अधमरा क्षुब्ध पारी पछाऱ्यो ।
बोल्ने चल्ने अघि जति थियो त्यो क्रमैले हरायो,
बिस्तारै नै विरतिपनले सुस्त सर्वाङ्ग छायो ॥
(२१)

छोराछोरी स्वजन सबमा मोह छोडी चटक्क,
आत्मा जोडी अविचल लगी ब्रह्मका साथ टक्क ।
बस्ने गर्थे जब पनि पिता लाग्दथ्यो काम नौलो,
हामीलाई सब नव थियो भाव जो हो सुनौलो ॥
(२२)

कैले कैले स्थिरतर भई मौन साधी समग्र,
बाबा बस्ता स्वजन सबमा बढ्दथ्यो ताप उग्र ।
आए कोही सुपरिचित बा भन्नुहुन्थ्यो न आऊ,
भेट्ने इच्छा अब पर भयो छैन सम्बन्ध जाऊ ॥
(२३)

आए घेरे परिजन भने भित्र वैराग्य जाग्थ्यो,
बाबालाई स्वजन सबको सास दुर्गन्ध लाग्थ्यो ।
यद्वा बाबा भव सब भुली ध्यान दी रन्धतामा,
ढोका ठोकी गुमसुम भई बस्नुहुन्थ्यो कुनामा ॥
(२४)

ठानी झूटो सकल दुनियाँ सत्य सम्झेर राम,
बिस्तारै नै जनक हुनु भो स्वान्तमै आप्तकाम।
चट्टै छोडी लटपट सबै या बनी स्त्रीवियोगी,
हेर्दाहेर्दै जनक हुनुभो कर्मसंन्यस्थ योगी॥

(२५)

हामी सोच्थ्यौँ सुझबुझ सबै त्यो कहाँ दूर भाग्यो ?
यद्वा बाबा विधुर हुनुभै यो दशा आइलाग्यो।
यस्तैमा नै जनमरणको नष्ट पारी उपाधि,
बाबा सोझै परमपदमा पुग्नुभो ली समाधि॥

(२६)

*– वन्दनाबाट*



# गुरुमाता

आभा थिइन् बालक बालिकाकी,
सन्मार्गगामी गुरु साधनाकी ।
सङ्कल्पकी सौष्ठव मूर्तिजस्ती,
बाला थिइन् झल्मल दीपजस्ती ॥
(१)

देख्ता थिइन् केवल एक नारी,
ती भीष्मझैँ सद्व्रतकी पुजारी ।
ती गर्दथिन् ब्रह्मविचार नित्य,
अलीक ठान्थिन् भव यो अनित्य ॥
(२)

डोऱ्याउथिन् सानु छँदा मलाई,
दिन्थिन् सहारा अघि बढ्नलाई ।
यो लोकदेखिन् परसम्म तानी,
भन्थिन् मलाई उनले कहानी ॥
(३)

सधैँ उजेली गिरिराजजस्ती,
ती वाटिकाकी नव पुष्पजस्ती ।
आदर्श उच्चो दृढता सतीझैँ,
आफैँ उठेकी हिमकी चुलीझैँ ॥
(४)

त्यागी सबै स्वार्थ परार्थ खालि,
लिएर हिँड्थिन् शिरमा उचाली ।
शिक्षा कसोरी म दिऊँ भनेर,
हिड्थिन् यिनी दीपशिखा बनेर ॥
(५)
यी चन्द्रमाझैँ तम दूर फाली,
निर्भ्रान्त बढ्थिन् ममता सँगाली ।
झर्ना थिइन् ती नव चेतनाकी,
खम्बा थिइन् शाश्वत भावनाकी ॥
(६)
मनस्विनीझै सब साथ हुन्थिन्,
दिएर अर्ती मनभित्र छुन्थिन् ।
तपस्विनीझैँ भ्रम राग छाडी,
हुन्थिन् सबैका सँगमा अगाडि ॥
(७)
लाग्दैनथ्यो दुःख गुमाउनाले,
प्रमत्त बन्थिन् न त पाउनाले ।
बाला थिइन् सागरझैँ अगम्य,
आकाशझैँ निर्मल शान्त सौम्य ॥
(८)

उदारजस्ती अनुदारजस्ती,
सद्भावना वा अनुरागजस्ती ।
मायामयी ती मृदुभावजस्ती,
वात्सल्यकी ती प्रतिमूर्तिजस्ती ॥
(९)

वैशाखजस्ती र वसन्तजस्ती,
ब्रह्मिष्ठ औ श्रोत्रिय सन्तजस्ती ।
ब्रह्मिष्ठकी ब्रह्मविचारजस्ती,
स्वान्तःस्थ सत्‌चित्‌ समभावजस्ती ॥
(१०)

म देख्छु टाढा नवरङ्गजस्ती,
चम्की रहेकी रविचन्द्रजस्ती ।
सामान्यजस्ती र विशेषजस्ती,
बुझेर झन्‌ बुझ्नु छ शेषजस्ती ॥
(११)

स्वर्लोकमा नै उनको छ वास,
छर्छिन्‌ धरामा उनले सुवास ।
प्रसार गर्छिन्‌ शुभभाव धेर,
जो झर्छ धर्तीतिर भा बनेर ॥
(१२)

सङ्कष्ट पर्दा सब कष्ट रोकी,
हामीहरूका भय ताप बोकी ।
दिइन् सहारा दृढ शक्ति साथ,
हामी बनेनौ कहिल्यै अनाथ ।।
(१३)

बच्चाहरूको ममता सँगाली,
गर्छे चरी रक्षण देह फाली ।
त्यस्तै गरी रक्षण दुःख साथ,
ल्याइन् उचाली समभाव साथ ।।
(१४)

सन्देश बोकेर यहाँ उदाइन्,
शिक्षा दिई शिक्षित जो बनाइन् ।।
अध्यासझैँ सुट्ट गइन् हराई,
भेट्नै नपाएर भइन् पराई ।।
(१५)

छ श्वास ताजा अझ यो हवामा,
छ वासझैँ लाग्दछ मृत्तिकामा ।।
बोली छ उस्तै अझ घन्किएको,
मुहार आँखाभरि चम्किएको ।।
(१६)

चम्केर तारासँग माथिबाट,
आशीष दिन्छिन् शुभभावसाथ ।
त्यो भाव नै शक्ति बनेर आई,
सत्प्रेरणा दिन्छ सधैँ मलाई ॥

(१७)

यद्वा उनी दूर भएर जाऊन्,
यद्वा उनी ब्रह्म बनी बिलाउन् ।
अद्वैत भै भिन्न चियाउँला म,
या द्वैत भै भेट्न कि आउँला म ॥

(१८)

देखाउँला पौरख नै भनेर,
टाढा भएँ छात्र म जो बनेर ।
पढेर फर्कें तर गैसकीछन्,
सुटुक्क आमै पर भै सकीछन् ॥

(१९)

सम्बन्ध हाम्रो सहसा हरायो,
ममाथि साँच्चै गुरुभार आयो ।
त्यो भार मैले कहिले तिरौँला,
सत्कार मैले कहिले गरौँला ॥

(२०)

बस्छिन् तिनी यो मन भित्र खास,
गर्छिन् सधैँ नै मुटुमा निवास ।
संस्कार पाएँ जुन बालकैमा,
जाँदैन कैल्यै पनि यो वृथामा ।
(२१)

वेदान्तकी अद्वय बोधजस्ती,
यद्वा उनी मौन अबोधजस्ती ।
हराभरा सुन्दर वागजस्ती,
बिहानकी झङ्कृत रागजस्ती ॥
(२२)

यी नेत्र खोल्ने सुरुमा उनै हुन्,
हामी सबैकी गुरुमा उनै हुन् ।
देखाइ सन्मार्ग गइन् कि अन्त,
यद्वा बनिन् ब्रह्म तिनी अनन्त ॥
(२३)

समीप हुन्थेँ अथवा त टाढा,
मेरो थियो स्नेह अभिन्न गाढा ।
आमै गइन् आज छ यै विषाद,
जे जे गरेँ यो उनकै प्रसाद ॥
(२४)

*– वन्दनाबाट*



# चरम अवस्था

बिस्तारै नै तन शिथिल भो दृष्टिको ज्योति भाग्यो,
भागे सारा दशन मुखका हातले यष्टि माग्यो ।
खाने इच्छा अब पर भयो पेटमा वायु जाग्यो,
बूढो तृष्णा तरुणतर भै जम्जमाएर जाग्यो ॥
(१)

वैरिन्छन् ती विगत दिनका सम्झना नीद भाग्यो,
आए नाना विकृति तनमा बिर्सिने रोग लाग्यो ।
छोराछोरी पर पर भए एक्लिँदा दिक्क लाग्यो,
के भो के भो बकबक गरी बोल्दिने रोग लाग्यो ॥
(२)

आमाबाबा अघि गइसके स्वप्न झैँ आज लाग्छ,
बाबाजस्तै अबल हुन गै थर्थरी देह काम्छ ।
आफ्नै मान्छे अब त किन हो हेय वा त्याज्य ठान्छन्,
फर्की फर्की विगत दिनले बेस्सरी लात हान्छन् ॥
(३)

साथीसङ्गी कति गइसके जान केही तयार,
देखिन्छन् क्यै अझ घिटिघिटी घाटमा लम्पसार ।
देखी यस्तो मरण अब ता त्रास अत्यन्त जाग्यो,
आफैँ देखिन् अब त किन हो ? घोर वैराग्य जाग्यो ॥
(४)

मेरो ऐले तन गलित भो घोर आलस्य छायो,
पापी तृष्णा तरुण तर भै जुर्मुराएर आयो ।
निन्द्रातन्द्रा अतिशय बढे घोर सन्ताप जाग्यो,
बिस्तारै नै अब दिनदिनै बोल्नु नै व्यर्थ लाग्यो ॥
(५)

मेरो बूढो तन हुनगयो ओज सौन्दर्य भाग्यो,
मेरो तृष्णा तरुण अति भै कल्पना लोक लाग्यो ।
तन्देरीकै सरह मनमा कामना उग्र जाग्यो,
काशी जाने चरम वयमा अम्रिका तर्फ लाग्यो ॥
(९)

मेरो फोक्सो मुटु पनि दुवै भैसके जीर्णशीर्ण,
मेरा गोडा कर पनि खुबै भैसके झन् विदीर्ण ।
घुम्ने इच्छा तर युवक भै सीधु झैँ उग्र लाग्यो,
धान्नैलाई अति सकस भो के दशा आज लाग्यो ?
(१०)

मेरा आफ्नै विगत दिनले बेस्सरी लात हान्छन्,
मेरै आफ्नै परिजनहरू भार या बोझ ठान्छन् ।
अज्ञानैमा सब दिन गए आज के खोज्नु रोई ?
कालो पालेँ कलुष मनमा फ्याँक्न के सक्छु ? धोई ॥
(१४)



# फर्केर हेर्दा

सेता अग्ला शिखरभरि नै लाल सिन्दूर पोती,
वर्षा गर्छन् रवि पनि जहाँ सिर्जना मूलज्योति ।
हाँसे जस्तो मुसुमुसु जहाँ खुल्छ नौलो बिहानी,
मेरो प्यारो हिमशिखर हो प्रेरणाको निशानी ॥

पाई ऐले पद र सुविधा भैसकेँ दूरदूर,
बोकी सोही प्रथम दिनको सम्झना जो छ दूर ।
जाहाँ जाऊँ तर पनि उही सम्झना हुन्छ बाँकी,
मैले तिर्ने प्रथम ऋण जो तिर्न नै त्यो छ बाँकी ॥

लाग्यो वर्षा जलथल भयो पानी बर्सेर धारा,
आँखामा त्यै घर जमिनका देखिने दृश्य सारा ।
मेरो बारी सब भिजिगयो बीज कल्ले उमार्ला,
माटोको त्यो मगमग हुने बास कल्ले सँभार्ला ॥

त्यै माटोको अति छ ममता तिर्सना भित्र बाँकी,
देख्ने कल्ले तर हरदमै स्वान्तमा चित्र बाँकी ।
मैले आफ्नू सब भनुँ भने भन्न नै के छ बाँकी,
जे जे सम्झेँ अब त सब ती सम्झनामात्र बाँकी ॥

*– आभासबाट*



# चस्स छुँदैन

सम्पत्तिशक्ति घरको ममता हरायो,
सम्पूर्ण देह अब भार भएर आयो ।
आँखा भए मलिन भोक मरेर आयो,
सारा शरीर कृश भैकन थर्थरायो ।।
आफ्नै भऱ्याङ अब चढ्न सकिन्न झट्ट,
आफ्नै दलान पनि दुर्गम भो विछट्ट ।
दन्तावलि क्षय भए अब सुस्त सुस्त,
ओज प्रभाव बल पौरुष भो विनष्ट ।।
सेतो हिमाल सरि भैकन केश पाक्यो,
तृष्णा जवान तर हिम्मत चाहिँ थाक्यो ।
वाणी भयो थकित गद्गद बोल्न गाह्रो,
ऐले भएँ म बहिरो अनि सुन्न साह्रो ।।
जाँदैन साथ पछि जानु छ हात शून्य,
जान्छन् पछाडि सँग केवल पाप पुण्य ।
हाम्रो छ सञ्चय यहाँ सब छोड्नु पर्छ,
जाँदैन साथ तन यो पनि छोड्नु पर्छ ।।
मातापिता स्वजन बान्धव ती समस्त,
लागे परत्रतिर सुस्त भएर अस्त ।
देखेर मृत्यु बहुधा भय नै हुँदैन,
आई विरक्ति मन चस्स छुँदै छुँदैन ।।

*– मुहार पुस्तिकाबाट*



# आफ्नै बारेमा

सर्दीगर्मी सब ऋतु घुमी छाप छोडेर जान्छन्,
मेरा आफ्नै विगत दिनले बेसरी लात हान्छन् ।
जे जे पैल्हे प्रियतम थिए आज लाग्दैन राम्रो ।
आफैंदेखिन् विरत छु सधैँ लाग्छ सारा नराम्रो ।।

बूढाबुढी दुइतिर बसी खोक्तछौँ श्वान जस्तै,
हामी पाका अब भइसक्यौँ भोग भोग्यौँ प्रशस्तै ।
हाम्रा थुप्रै स्वजन पनि छन् गर्दछन् काम नाना,
आफ्ना भन्छौँ तर सकल ती भै सकेछन् विराना ।।

आफूभित्रै विगत दिनका संझना मात्र पाली,
बाँचेका छौँ जिनतिन यहाँ सास केही सँगाली ।
कल्ले सुन्ने भनुँ पनि भने दिन्छ कल्ले र कान,
काट्छन् मेरा वचन बहुधा खोज्दछन् नित्य मान ।।

हामी जोडी दुइतिर बसी जिन्दगी नित्य हाछौं,
कैले बोल्छौँ बकबक गरी या नबोलेर टाछौं ।
हाम्रा सारा कटुमधुहरू मौन भै नित्य साट्छौँ,
यस्तै चालासँग बुझ तिमी जिन्दगी नित्य काट्छौँ ।।

*– पत्रपत्रबाट*



# काखमै फेरि आएँ

अग्ला सेता शिखरतलका गाउँमा जन्मिएँ म,
ठाडो खोलासरि हरघडी हुर्रिंदै हुर्किएँ म ।
झर्नाजस्तै झरझर झरी दूर पाखा गएँ म,
बिर्सी आफ्नी वरद जननी धेर टाढा भएँ म ॥

बढ्दै टाढा जति पनि गएँ मै भएँ झन् प्रमादी,
बिर्सें मैले क्रमसँग सबै स्नेहवात्सल्य आदि ।
मैले गर्ने जति पनि थिए ती सबै बिर्सिआएँ,
के हो के हो अबुझ म भएँ स्वार्थमा नै हराएँ ॥

आमा ! तिम्रो रहर मनको सिर्जना हूँ म एक,
यस्तो स्वार्थी किन हुन गएँ लाग्छ सारै उदेक ।
हाँसें रोएँ लुटुपुटु भएँ काखमा नै हराएँ,
ताती गर्दै टुकुटुकु हिंडें हात तिम्रै समाएँ ॥

आमा ! तिम्रै वरिपरि घुमें नित्य गाई चराई,
मैले काटें प्रथम वय जो हाँसिखेली रमाई ।
जान्थें टाढा जति पनि म ता सम्झना साथ हुन्थ्यौ,
आमा मेरा रगत कणमा भित्रभित्रै बहन्थ्यौ ॥

बिस्तारै नै जब अघि बढें भीडमा नै हराएँ,
आमा सम्झें जति पर गएँ खूब रोएँ कराएँ ।
हिँड्दाहिँड्दै वय पनि गयो भित्र आफैं डराएँ,
फर्कें आमा ! भ्रमण सकियो काखमै फेरि आएँ ॥

*– आभासबाट*



# मातृभूमि

बर्सिन्छन् हिमशैलबाट झरना बर्साउँदै स्वर्धुनी,
बग्छिन् निर्मल दूधकी हिमनदी मेरै करेसा मुनि ।
मेरै उच्च हिमालका शिखरमा हाँस्छन् बिहानै रवि,
पन्साई जड हुस्सुको दल सबै खोली सुनौलो छवि ॥

पत्रैपत्र छ भूमिको तहपरी छन् श्यामला ती धरा,
रावाका तटमा छ खेत मलिलो बेसी सदा उर्वरा ।
राम्रा छन् बनवाटिका तरुलता एकान्तमा छन् घर,
चारैतर्फ हराभरा प्रकृतिको साम्राज्य हो सुन्दर ॥

झर्छन् झर्झर हैमनिर्झरहरू झङ्कार बर्साउँदै,
आफ्ना नै प्रतिगुञ्जना सँगसँगै सङ्गीतमा गाउँदै ।
पाई प्राकृत राज्य यो प्रकृतिको उन्माद फैलाउँदै,
आफैँ मस्त भएर गाउँछ चरो उद्दीप्त साह्रै हुँदै ॥

माटामा अझ गन्ध बग्दछ उही बर्षात पैलो हुँदा,
बर्सिन्छन् मृदु भावना झरभरी त्यै मृत्तिकामा छुँदा ।
मेरो गाउँ समीप हाँस्तछ सधैँ सर्वोच्च शैलेश्वर,
जाऊँ लाग्छ सधैँसधैँ किन उही पाखापखेरातिर ॥

देखेथैँ अघि बर्सिंदो घनघटा रोपाइँको उत्सव,
पाकेका लटरम्म खेत सबमा हैमन्त धान्योत्सव ।
ऐले साथ छ संभ्भदा विगतको सोही पुरानै सब,
बाँचेको छु म आज यो सहरमा आफैँ हराई अब ॥

मेरा पर्वत उच्च शैल वनमा उन्माद फैलाउँदै,
खोज्छन् व्याकुल भै सधैँ वनचरी सङ्गीतमा गाउँदै ।
खोज्छन् बालख कालका दिनहरू टाढा कुनामा बसी,
मैले नै सब बिर्सिएँ पर भएँ यो काठमाडौँ पसी ॥

डाँफे बाज मुनाल कालिजहरू सौन्दर्यका वाहक,
बस्छन् माथि कताकता विजनमा मानेर सारै धक ।
आफैंभित्र सुगन्धको महक त्यो राखेर आफैँसित,
कस्तूरी मद खोज्छ बाहिर सधैँ भागेर आफैँसित ॥

हाम्रा औषधि मन्त्रतन्त्र जति छन् गुप्तार्थ हामीसँग,
हामी गौरव मान्दछौँ सब कुरा पाएर हामीसँग ।
हामी मत्त भई प्रदर्शन गरी खोलेर सारासँग,
भन्दैनौँ सब गुप्त बात कहिल्यै जाली फरेबीसँग ॥

धेरै उच्च हिमाद्रिका सतहमा छन् कुण्ड नानाथरी,
बन्छन् स्रोत अनन्तसम्म बहने संगीतका निर्झरी ।
चाँडै पुग्न समुद्र तीव्र गतिले दौडेर ठाडै झरी,
बग्छन् उच्च हिमालबाट झरना बर्साउँदै माधुरी ॥

आमाबाबु र दाजुभाइ रहने यो माइती हो तर,
गर्छिन् स्नेह असाध्य शैलतनया ठानेर आफ्नै घर ।
आफ्ना बान्धव छन् जहाँ छ ममता जाने त्यहाँ नै सब,
गौरीशङ्कर बस्तछन् तल झरी कैलाश छोडी अब ।।

नाच्छन् मत्त मयूर फर्फर जहाँ ठाडो गरी पुच्छर,
इन्द्रेणी रङ थप्छ नित्य जसमा पारी सबै सुन्दर ।
फर्की हेर तिमी उतैतिर सधैँ बस्छन् जहाँ शङ्कर,
पृथ्वीको शिर झैँ छ उन्नत सधैँ नेपाल मेरो घर ।।

कैयौँ देवल चैत्य छन् मुलुकमा छन् मन्दिरैमन्दिर,
द्यौता छन् घरभित्र बाहिर सदा नेपाल यो सुन्दर ।
छन् सोझा जन बस्तछन् मिलिजुली आफ्ना छिमेकीसित,
आफ्नै राष्ट्रविषे छ भक्ति बहुतै सोच्छन् सबैको हित ।।

– *पत्रैपत्रबाट*



# प्रारब्धका भै वश

टेर्दैनन् घरका अटेर सब छन् जो भित्र या बाहिर,
आफ्नै इन्द्रिय छन् अटेर सब यी टेर्ला र को बाहिर ।
पैले शक्ति छँदा सबै थरथरी काम्थे डराईकन,
उल्टै तीसँग लुक्नु पर्छ अहिले मुन्टो लुकाईकन ॥

आफ्नै जीवन छैन आफ्नू वशमा को हुन्छ अर्को वश,
मेरो जीवन भो अपाङ्ग अति नै भै रोगका नै वश ।
ऐले सुत्तछु इन्तु चिन्तु नगरी प्रारब्धका भै वश,
कल्ले सुन्छ र यो व्यथा हृदयको जो भैसक्यो वेवश ॥

संसारी रस खाइयो र यसका छोक्रा सबै खाइयो,
जैले सम्म युवा थिएँ सब पच्यो खाएँ जता पाइयो ।
ऐले खानु हुँदैन भो विष सबै पैले जसो खाइयो,
त्यस्कै कारण आज रुग्ण म भएँ खाई स्वयं खाइयो ।

वन्दी भैकन बस्न बाध्य छु यहाँ अन्नादिका कोषमा,
सारै जीर्ण छ देह यो मन भने उड्दो छ आकाशमा ।
कल्ले बुझ्दछ कष्ट यो हृदयको मैले सुनाऊँ कहाँ,
सुन्ने ठाउँ छ एउटै दहरको अव्यक्त ठाउँ जहाँ ॥

पाँचोडा जड कोषभित्र थुनिई वन्दी भई बस्तछु,
भोगी भोग स्वकर्मको हरघडी संसारमै मस्तछु ।
मायाको म भएर दास अहिले घुम्दोछु संसारमा,
यो वन्दीगृहबाट छुट्छु कहिले द्यौ दृष्टि यो अन्धमा ॥



# संसार

गोडा भए जड दुवै सकिँदैन चल्न,
दुर्गम्य आँगन कठीन भयो छिचोल्न ।
छन् आँत दाँत अति दुर्बल दुर्विसह्य,
सारा शरीर अब जर्जर भो असह्य ।।
(१)
लाग्दैन नीद अति छट्पट हुन्छ राति,
खोकी असह्य छ र सास भयो खलाँती ।
यो देह नै सकल भार भएर आयो आयो,
लागेर बाथ तन यो लँगडो बनायो ।।
(२)
लाग्दैन भोक र बढीकन उग्र वात,
मदाग्नि भै अपच हुन्छ र फुल्छ आँत ।
भै रक्त चाप अति उच्च सताउँदो छ,
अर्को छ रोग मधुमेह गलाउँदो छ ।।
(३)
यो हाल भो र तनको मन झन् अशान्त,
लाग्दैन भक्तितिर यो मन लाग्छ अन्त ।
सद् ज्ञान छैन अझसम्म निसासिँदो छु,
संसार लाग्छ अझ सत्य म भासिँदो छु ।।
(४)

सुन्दैन मानिस भलो अनि सत्य बात,
दौडिन्छ बाहिर अहर्निश गर्छ घात ।
ऊ प्रातदेखि रजनीतक दौडमा छ,
फर्कन्न भित्रतिर बाहिर नै मजा छ ॥
(५)

नाफा छ वस्तु कुनमा कति जोर्न सक्छ,
नोक्सान हुन्छ कुनमा कति चोर्न सक्छ ।
यै जोड तोड अनि मोल गरेर सारा,
फूँयाक्तै छ जीवन सधैँ भइ सर्वहारा ॥
(६)

धेरै कमाउनु ठुले पुरुषार्थ ठान्छ,
डुब्दैछ जीवन डुँगा तर फिस्स मान्छ ।
सर्दैछ घोर रजनी उसतर्फ सुस्त,
यो होस छैन बबुरो धनमा छ मस्त ॥
(७)

बाबा गए र जननी पनि आज छैनन्,
आफ्नै सबै गइसके अब देखिँदैनन् ।
उस्को हुने छ गति त्यै किन होस छैन,
बुझ्दैन अज्ञ नर होसहवास छैन ॥
(८)

चल्दैन देह जड छन् सब हात पाउ,
वाणी भयो थकित शून्य छ हाउभाउ ।
संसारको दलदले दहभित्रमा छु,
चुर्लुम्म नै डुबिसकेँ म निसासिँदो छु ।।
(९)
सारा शरीर अब दुख्तछ झम्झमाई
मूढो समान म भएँ छ सधैँ थकाई ।
क्वै छैन साथ सब आज भए पराई,
छन् स्वार्थमा रत समस्त गए हराई ।।
(१०)
पैले म यौवन छँदा अति मस्त बन्दै,
लागेँ म रङ्गरसमा सब तुच्छ गन्दै ।
संसार यो सकल नै जितुँला म ठान्थेँ,
ठूलाबढा मनुज हुन् भुसुना म मान्थेँ ।।
(११)
उल्टो भयो सकल उल्टिन गो समस्त,
मेरो घमन्ड सकियो र अहं छ अस्त ।
त्यो संझदा विगत लाग्दछ स्वप्न आज,
मेरो अतीत अब सम्झन मान्छु लाज ।।
(१२)
अज्ञानजन्य जड बन्धनको विकास,
षड्भावको विकृति हो क्रम वृद्ध खास ।
नाघेर शैशव युवा अब वृद्धतामा,
आकण्ठ नै डुबिसकेँ म समग्रतामा ।।
(१३)

बूढो भयो तन भने मन भो जवान,
चल्दैन देह मन खोज्दछ दूर जान ।
तृष्णा छ उग्र मनमा यसले सतायो,
मेरो अतीत अति दुच्छर सल्बलायो ॥
(१४)

आफ्नै स्वकर्मसँग नित्य डराउँदोछु,
यै तापले दिनदिनै म हराउँदोछु ।
यो फ्याँक्न सक्तिन म वा न पखाल्न सक्छु,
कल्लाई पोख्नु वह यो अलमल्लमा छु ॥
(१५)

यो वृद्धता र जडता सबमा हुँदैन,
ज्ञानी गुणी हुन सके यसले छुँदैन ।
यी बाह्य मायिक अशाश्वत हुन् विकार,
आत्मा छ भित्र अजरामर निर्विकार ॥
(१६)

अज्ञानजन्य कति देहहरू लिएर,
आब्रह्मदेखि भुसुना तकमा गएर ।
घुम्दोछु फन्फन म जन्महरू लिएर,
विश्राम छैन कहिल्यै पनि जन्मिएर ॥
(१७)

ऐले बुढो हुन गएँ अनि होस आयो,
पैले छँदा युवक सुद्धि कता हरायो ?
जैले समर्थ म थिएँ नबुझी हराएँ,
बूढो भएपछि कठै अब होस पाएँ ॥
(१८)

देखी जरा मरण रुग्ण खुलेन चेत,
संसारको मद पिएर थिएँ अचेत ।
ऐले खुल्यो क्षणिक चेत भएँ अशक्त,
सद्ज्ञान छैन न छ भक्ति भएँ विरक्त ॥

(१९)

वेदान्तवेद्य कुन हो कुन भक्तिवेद्य,
ज्ञानै भएन कहिल्यै पनि वेदवेद्य ।
सत्शास्त्र नै पढिन होस भएछ अस्त,
बेकार जीवन गयो नबुझी समस्त ॥

(२०)

सम्पत्तिको मद पिएर म मात्तिँदो छु,
बेला गयो अब भनेर म आत्तिँदो छु ।
लागेर रोग अहिले म भए अपाङ्ग,
मेरा गए दिनहरू अब हुन्न साङ्ग ॥

(२१)

अध्यासजन्य भव बन्धन हो अनर्थ,
त्यस्को छ कारण जहाँ त्यसको छ अर्थ ।
खुल्लान् जसै सकल बन्धन हुन्छ मुक्ति,
हो मुक्ति नै परम साध्य र वाक्य युक्ति ॥

(२२)

त्यै स्वस्थ हो जुन छ चित्स्वरूपस्थ नित्य,
अस्वस्थ हो जुन छ दैहिक भावयुक्त ।
अप्रत्युतत्व जसमा छ सदा स्वरूप,
त्यै स्वस्थ हो अखिलनायक सत्स्वरूप ।।
(२३)

संसार हो भ्रमित दुस्तर आर्तिमूल,
घोच्ला सधैँ चसचसी हुन जान्छ शूल ।
माता पिता सकल हुन् हरि विश्वनाथ,
जाऊँ परौँ शरणमा सब छौँ अनाथ ।।
(२४)

आबाल वृद्धवनिता जति छौँ मनुष्य,
यद्वा चराचर सबै हरिवश्य दृश्य ।
द्रष्टा छ एक उही शाश्वत सच्चिदात्मा,
सत्ता दिएर अनि चिन्मय बन्छ आत्मा ।।
(२५)



# आन्तर द्वन्द्व

यात्री –

सूर्य जस्तै म बिस्तारै वयको खोँचमा झरेँ ।
सन्ध्याको सान्ध्य वेलामा यात्रा सायद यो गरेँ ॥
(१)
चम्कँदो सूर्यको कान्ति देखिँदैन कतैतिर ।
बिस्तारै तम यो कालो बढ्दै नै छ म नै तिर ॥
(२)
हरायो रविको कान्ति थिएन कहिल्यै सरि ।
चारैतिर म देख्तैछु त्रासदीपूर्ण शर्वरी ॥
(३)
चारैतर्फ कुदेका छन् ब्वाँसा स्याल निशाचर ।
एक्लै छु र म हिँड्दै छु लिएर यष्टिको भर ॥
(४)
रातको पहिलो याम भर्खरै नै भयो सुरु ।
हिड्ने हो कति अन्धो झैँ दुर्लङ्घ्य मार्ग यो अरू ॥
(५)
टाढा टाढा म देख्तैछु झिल्ल झिल्ल कहीँ कहीँ ।
अन्यथा घुप्प देखिन्छ कालरात्रि जहीँ तहीँ ॥
(६)

जता हेऱ्यो उतै देख्छु कालैकालो सबैतिर ।
कालो घुप्प अँध्यारोमा हिँड्नु नै छ निरन्तर ॥
(७)
ठेस लाग्छ कहीँ सारै काँडा बिज्छन् कहीँ कहीँ ।
चिप्लिएर पछारिन्छु बजारिन्छु जहीँ तहीँ ॥
(८)
गोडा छन् अति नै सुस्त पाइला जब चाल्दछु ।
पाइला मुनिको धर्ती खस्किए सरि ठान्दछु ॥
(९)
जब आधार खस्कन्छ कसरी हिँड्न सक्तछु ।
हिँड्दै छु तर यो देह थाम्नलाई अशक्त छु ॥
(१०)
आफ्नै अस्तित्वका लागि आफू नै सँग लड्नुछ ।
अँध्यारो पथ छोडेर प्रकाश तिर बढ्नु छ ॥
(११)
प्रकाश भेट्न बढ्दै छु के होला भन्न सक्तिन ।
अगाडि नबढी ऐले म यसै अड्न सक्तिन ॥
(१२)
पहिले नगरी कर्म कसरी छोड्न सक्तछु ।
अहिले नहिँडी बाटो कसरी अड्न सक्तछु ॥
(१३)

जहाँबाट म आएथेँ सोही नै फेरि भेट्नु छ ।
युगौँको तिर्सना मेरो मैले अवश्य मेट्नु छ ।

(१४)

एकाकी अन्धबाटोमा त्रस्त भै पद चाल्छु म ।
छुटे स्त्री पुत्र गेहादि साथ को हुन्छ अन्तिम ।।

(१५)

जहाँबाट म आएँथेँ त्यहीँ फर्केर जानु छ ।
आफ्नै सञ्चिति बोकेर मैले सम्बल लानु छ ।।

(१६)

'ईशा वास्यमिदं सर्व यत्किञ्च जगत्यां जगत् ।
तेन त्यक्तेन भुञ्जीथा मा गृधः' भन्नु हो फगत् ।।

(१७)

कल्ले मान्दछ यो वाक्य स्वार्थमा सब छोपियो ।
महाभारतको बीज यसैकारण रोपियो ।।

(१८)

आँखा मेरा खुला नै छन् तर देखिन्न लौ कतै ।
रतन्धो रोग लाग्यो कि ? कालो देख्छु जताततै ।।

(१९)

म आफ्नू गति रोकौँ कि ? अँध्यारोमा हिँडौ कति ।
म रुक्तैमा कहाँ रुक्छ समयचक्रको गति ।।

(२०)

इतिहास छ साक्षी भैँ हामीलाई सिकाउने ।
शक्तिशाली थिए राजा इन्द्रलाई झुकाउने ॥
(२१)
समेट्न सब खोजे हुन् तर खै साथ के लगे ।
सकेनन् कहिल्यै रोक्न त्यसमा सब ती बगे ॥
(२२)
यो चक्र कति घुम्ने हो कसले भन्न सक्तछ ।
संसार चक्र हो यो ता कसले थाम्न सक्तछ ॥
(२३)
यो रोक्न अति गारो छ बुझ्नलाई छ दुस्तर ।
यसमा घुम्नु नै पर्छ हिँड्नु पर्छ निरन्तर ॥
(२४)
पाउ भारी भए मेरा बिस्तारै पद चाल्दछु ।
भुइँचालो चले जस्तो घुमाए सरि ठान्दछु ॥
(२५)
जब आधार खस्कन्छ कसरी हिँड्न सक्तछु ।
हिँड्दैछु तर आफ्नै ज्यू थाम्नलाई अशक्त छु ॥
(२६)
लाठी छ हातमा मेरो मन मस्तिष्क शून्य छ ।
जिजीविषा छ तन्देरी ऊर्जा आधार शून्य छ ।
(२७)

हिँड्नु प्रकृति हो मेरो अड्नु विकृति बन्दछ।
'चरैवेति चरैवेति' वेदले पनि भन्दछ॥
(२८)
आफ्नू गन्तव्य बिर्सेको यात्री जस्तो भएँ अब।
कता हिँड्दै छु के निम्ति प्राप्ति गर्नुछ के अब ?
(२९)
दिशाविहीन दिग्भ्रान्त आफूलाई म मान्दछु।
हिँड्नु नै बाध्यता मेरो हिँड्नु पर्दछ ठान्दछु॥
(३०)
ध्रुवतारा तिमीलाई मेरो नमन नित्य छ।
तिम्रो नै कुलको भाग्य अनिश्चित अनित्य छ॥
(३१)
शन्तनुको बुभुक्षाले अनर्थ सब फैलियो।
कलिलो भीष्मको बैँस सहसा जब वैलियो॥
(३२)
प्रतिज्ञा भीष्मको ऐले बन्यो कार्य अनर्थको।
त्यागको जगमा उम्म्रो महायुद्ध भविष्यको॥
(३३)
क्रमलाई बिगारेर जब हुन्छ व्यतिक्रम।
नासिन्छ सब बिग्रन्छ फैलन्छ सबमा भ्रम॥
(३४)

मिचिन्छ जब यौटाको अधिकार अकुण्ठित ।
त्यही परम्परा बस्छ भविष्य बन्छ वञ्चित ॥
(३५)
कुलधर्म जहाँ टुट्छ व्यभिचार बढाउँछ ।
कृत्याकृत्य हराएर स्वार्थीवाद उदाउँछ ॥
(३६)
जन्मे विकृत सन्तान कुरुवंश निसासियो ।
रोगी अन्धाहरूबाट आक्रान्त वंश मासियो ।
(३७)
अपाङ्गहरूमा शक्ति तानातान भयो जब ।
उच्च भरतआदर्श बन्यो धूमिल नै तब ॥
(३८)
राष्ट्रको अस्मिता हर्न दुःशासन छ तत्पर ।
सर्वत्र व्याप्त देखिन्छ कुशासन भयङ्कर ॥
(३९)
अन्धाले जब कुर्सीमा बसी शासन गर्दछ ।
समाज राष्ट्र यो सारा भड्खालातर्फ झर्दछ ॥
(४०)
जुवा आज चलेको छ राष्ट्र राखेर दाउमा ।
बिकेको छ यहाँ स्वत्व कौडीका मात्र भाउमा ॥
(४१)

मन्त्रणा जब कोठामा शकुनिहरू गर्दछन् ।
त्यै घेरा भित्र नै सारा अन्धाशासक पर्दछन् ॥
(४२)

अन्धाले जब नेता भै नेतृत्व गर्न थाल्दछ ।
गर्ने के र नगर्ने के शङ्का उब्जन थाल्दछ ॥
(४३)

खै कहाँ छ यहाँ न्याय खै कहाँ छ सदाशय ।
देखिँदैन कुनै मान्छे बनेको आज निर्भय ॥
(४४)

सभामा वृद्ध यी मान्छे बसेका छन् बनी जड ।
बोल्दैनन् किन यी मान्छे बन्दैनन् किन यी दृढ ॥
(४५)

बीचमा वस्त्र नारीको तानिँदैछ दनादन ।
आफ्नो शिर झुकाएर बसेका छन् सबै जन ॥
(४६)

दाउमा सब थापेर राज्य नारी र भूषण ।
समाजमा छरेका छन् चारैतिर प्रदूषण ॥
(४७)

जब कर्तव्य छोडेर कुकर्म तिर लाग्दछ ।
नपुंसक बनी मान्छे आफू नै सँग भाग्दछ ॥
(४८)

भीष्म –

अनर्थ के भयो यस्तो प्रबुद्ध वंश वैलियो ।
मेरो त्याग प्रतिज्ञाले मूलमा विष फैलियो ॥
(४९)

मेरै कारणले हो वा प्रारब्धले भयो सब ।
मेरो उत्साह मर्दैछ कर्तव्य कुन हो अब ॥
(५०)

मेरो कर्तव्य संभ्झेर मैले उत्सर्ग जो गरेँ ।
आखिरी त्याग आफ्नू नै पासो भो त्यस मै परेँ ।
(५१)

राजपाट सबै त्यागी म खडा छु सधैँभरि ।
सुरक्षा कुलको गर्न बनेर प्रहरी सरि ॥
(५२)

काशीनरेशका पुत्री घमन्ड साथ जो हरेँ ।
अल्पायु भाइका लागि नगर्ने काम जो गरेँ ॥
(५३)

प्रमादवश अम्बामा अन्याय जुन हो गरेँ ।
म मृत्युञ्जय मृत्युको अवश्य वशमा परेँ ॥
(५४)

कुरुको कुल आएर सहसा टुङ्गिने भयो ।
आफ्नै कारण संभ्झेर आमाको मन पग्लियो ॥
(५५)

कुलका निम्ति आमाको नियोगाज्ञा सुनी रहेँ ।।
अवज्ञा साथ आफ्नू नै प्रतिज्ञामा अडी रहेँ ।।
(५६)
वंशोच्छेद हुने देखी म मृत्यु झैँ चिसो भएँ ।
प्रतिज्ञा बोझ भो मेरो धर्तीमा भासिँदै गएँ ।।
(५७)
गरियो कुलका निम्ति नियोग जुन दुष्कर ।
आँखा अगाडि नै मेरा जन्मिए वर्णसङ्कर ।।
(५८)
कुलको मोह हो कस्तो म कैल्यै छोड्न सक्तिन ।
मेरो बन्धन यो नै भो प्रतिज्ञा तोड्न सक्तिन ।।
(५९)
आफ्नो नै वंशमा यत्रो अनाचर हुँदा पनि ।
सहने बाध्यता कस्तो ? कुलका निम्तिमा भनी ।।
(६०)
पिताका लागि नै मैले प्रतिज्ञा पहिले गरेँ ।
भयो बन्धन सोही नै त्यसै बन्धनमा परेँ ।।
(६१)
मेरो नै त्यागले आज चल्दैन कुल यो भने ।
म कस्को निम्तिमा बाँच्ने म कस्को प्रहरी हुने ।।
(६२)

हेर्दाहेर्दै डुब्यो हाम्रो कुरुवंश यसै भने ।
माने के छ ? प्रतिज्ञाको किन हो व्रत यो लिने ॥
(६३)

के गरौँ तोड्न सक्तिन आफ्नै वचन के भएँ ।
आफ्नू गन्तव्य बिर्सेको अन्धो पथिक झैँ भएँ ॥
(६४)

देखे पनि नदेखे झैँ अत्यन्त नग्न दुष्कृति ।
म बाँचेको छु यहाँ आज दिएर मौन स्वीकृति ॥
(६५)

आज यो वंशमा आयो जसरी बाह्य दुष्कृति ।
नबनोस् पछिका लागि यही नै ग्राह्य संस्कृति ॥
(६६)

कुलका हितका निम्ति जानेर पनि जान्दिन ।
अनाचार सबै यो हो राम्रो भन्ने म ठान्दिन ॥
(६७)

तर स्वअस्मिताशून्य लाचार प्रतिबिम्ब झैँ ।
म खडा छु यहाँ आज बूढो सिमल वृक्ष झैँ ॥
(६८)

नाममा पितृभक्तिको प्रतिज्ञा गरियो जुन ।
मैले त्यो पहिलो गल्ति गरेँ भावुक भैकन ॥
(६९)

छोप्न त्यो पहिलो गल्ती धेरै गल्ती अरू भए ।
महाभारतका लागि यिनै कारक भै दिए ॥
(७०)
जित्न गाह्रो छ आफू नै आफू नाघ्नु छ दुस्तर ।
म आफैँसँग हारेर बाँचेको छु निरन्तर ॥
(७१)
म भन्ने कति हुन् मेरा सहस्र म छु मै भरि ।
म सधैँ तर्सदै हिँड्छु भागेको थुनुवा सरि ॥
(७२)
आफ्नू नै त्याग भो शत्रु त्यसैसँग डराउँछु ।
मेरो नै तिर्सना साथ सधैँ सङ्घर्ष गर्दछु ॥
(७३)
भविष्य मुख बाएर बढ्दै छ गर्न भक्षण ।
तै पनि छु खडा आज कुलको गर्न रक्षण ॥
(७४)
काम काल दुवैलाई जितेको छु र तै पनि ।
मोहका वशमा घुम्छु अन्धो भई अझै पनि ॥
(७५)
हठधर्मी कुनै भन्छन् कोही भन्छन् दुराग्रही ।
म आफैँ बुझ्न चाहन्न सही हुँ कि म बेसही ॥
(७६)

कुन्ती –

पाण्डुकी पटरानी हुँ कुन्तिभोज कुमारी हुँ ।
अस्मिता साथ बाँचेकी यौटी चिरकुमारी हुँ ॥
(७७)

अशक्त पतिको आज्ञा पाएर बाध्य भैकन ।
अक्षुण्ण राख्न सन्तान अति धैर्य लिईकन ॥
(७८)

जन्माएँ जति यी छोरा नियोग योग हुन् सबै ।
बन्धुदायक होइनन् प्रणीत पुत्र हुन् सबै ।
(७९)

नियोग विधिले प्राप्त मेरा सन्तान हुन् यिनी ।
यो स्वीकार्य थियो पैले शन्तनुवंशमा पनि ॥
(८०)

स्वायम्भुव मनुद्वारा बाँधेको अनुशासन ।
थियो अघि सबै गर्थे यसको परिपालन ॥
(८१)

पुत्र कानीन हुन् यद्वा प्रणीत यी दुवै थरी ।
अत्यन्त वीर छन् मेरा छोराहरू सधैँ भरि ॥
(८२)

मलाई लाञ्छना लाई मेरो हुर्मत खोल्दछन् ।
अवस्था नबुझी मेरो बनी वाचाल बोल्दछन् ॥
(८३)

थियो चलन पुर्खाको आदेश पतिको थियो ।
अक्षुण्ण कुल यो राख्नु पहिलो बाध्यता थियो ॥
(८४)
यसैले यो गरेँ मैले नीति अनीति जे बनोस् ।
क्षेत्र प्रधान हो मेरो जसले जे सुकै भनोस् ॥
(८५)
बाबु जस्ता भए छोरा कसको दोष यो भनौँ ।
जे भयो सहनै पर्छ प्रारब्ध कर्म नै भनौँ ॥
(८६)
मलाई लाञ्छना दिन्छौ देख्तैनौ दुःख तैपनि ।
मेरो हालत कस्तो छ खोज्दैनौ बुझ्न तैपनि ॥
(८७)
नारी हुँ सबका साथ धारामा जल भर्दछु ।
मलाई पनि द्यौ बाँच्न जे परे पनि गर्दछु ॥
(८८)
राजाकी पटरानी हुँ दुःखी छु म सधैँभरि ।
मेरा दिन बितेका छन् रोएर नित्य धर्धरी ॥
(८९)
मेरो चरित्रमा लाग्यो कालो दाग उसै दिन ।
अज्ञानैमा भयो जैले कुमारित्व विसर्जन ॥
(९०)

मेरा आत्मज हुन् कर्ण म माया गर्न सक्तिन ।
योे कुरा सबका सामु म भन्न पनि सक्तिन ।।

(९१)

नहुने गर्दछौँ काम गर्दछौँ नग्न दृष्कृति ।
हामीले कसरी रक्षा गर्छौं प्राचीन संस्कृति ।।

(९२)

यात्री –

अन्धकार सरी अन्धा धृतराष्ट्र तमोमय ।
स्वार्थान्ध ती भएकाले आफ्नै वंश गरे क्षय ।।

(९३)

अविद्यायुक्त गान्धारी अज्ञान उनका पति ।
यसै कारणले जन्मे खलनायक सन्तति ।।

(९४)

असद्वृत्तिहरूबाट जन्मे  दुर्बुद्धि कौरव ।
अति स्वार्थान्धले गर्दा गए नरक रौरव ।।

(९५)

कुन्ती हुन् सती सद्वृत्ति असद्वृत्ति गरी क्षय ।
आफ्ना सद्वृत्तिले युक्त गराइन् पुत्रको जय ।।

(९६)

ज्ञानेन्द्रियहरू पाँचै युधिष्ठिरादि पाण्डव ।
यसै कारणले पारे भस्म कौरव खाण्डव ।।

(९७)

द्रौपदी प्रेरणा शक्ति सद् उत्साह प्रदायिनी ।
उनकै प्रेरणा पाई उत्रे पति जयी बनी ॥
(९८)
श्रीकृष्ण परमात्मा हुन् साक्षी कारक धारक ।
सत् चित् आत्मा परं ब्रह्म अज्ञान ध्वंसकारक ॥
(९९)
महाभारतको युद्ध वृत्ति आन्तर शाश्वत ।
महाभारतको युद्ध बाह्य मिथ्या अश्वाश्वत ॥
(१००)
मान्छेका भित्रको युद्ध भावगम्य अदृश्य हो ।
महाभारतको युद्ध वृत्ति आन्तरजन्य हो ॥
(१०१)
धृतराष्ट्र बसेका छन् गद्दीमा भइ शासक ।
दुःशासन बढेका छन् अस्मिता हर्न नाहड ॥
(१०२)
शकुनि मन्त्रणा गर्छन् विना लाज विना भय ।
दुर्योधन छ तंसेको राष्ट्रको गर्न संक्षय ॥
(१०३)
महाभारतको युद्ध के भन्नु ? बाहिरी कथा ।
आफू नै भित्र उर्लन्छ बनेर मनको व्यथा ॥
(१०४)

रक्तचाप बढेको छ दुर्योधन सरी बनी ।
मधुमेह बढेको छ घटोत्कच सरी बनी ॥
(१०५)
रोगशोकादिले गर्दा अत्यन्त जीर्ण भो तन ।
दुःशासन बढेको छ अस्मिता गर्न मर्दन ॥
(१०६)
मान्छेकै भित्र नै चल्छ महायुद्ध सधैँभरि ।
कोटियौँ लड्दछन् योद्धा अक्षौहिणी थरी थरी ॥
(१०७)
महाभारत मच्चिन्छ मान्छेभित्र सधैँभर ।
अज्ञानाच्छन्न मान्छे हो तमोगुणी निशाचर ॥
(१०८)
युद्धको क्षेत्र हो देह पापपुण्यादिले युत ।
धर्मक्षेत्र कुरुक्षेत्र आफैँ मनुष्य वस्तुतः ॥
(१०९)
विकर्म कुरु हुन् पाप धृतराष्ट्रात्मजादिक ।
सुकर्म पाण्डुका पुत्र धर्म हुन् अर्जुनादिक ॥
(११०)
मान्छेको देह हो क्षेत्र पापपुण्यादि मिश्रित ।
धर्मक्षेत्र कुरुक्षेत्र देह नै हो सुनिश्चित ॥
(१११)

गीताले देहलाई नै क्षेत्र हो खास भन्दछ।
पाई क्षेत्रज्ञको शक्ति चेतनायुक्त बन्दछ॥
(११२)

मान्छेको देह हो क्षेत्र जड मिथ्या र मायिक।
क्षेत्रज्ञ हुन् स्वयम् कृष्ण ब्रह्म सत्‌चित् अमायिक॥
(११३)

भूभार हर्नका लागि महाभारत जो भयो।
कृष्णकै सब हो इच्छा नरसंहार जो भयो॥
(११४)

युद्धका पुतली सारा अग्नि हुन् भगवान् स्वयम्।
त्यसैमा होमिई सारा खरानी युद्ध भो स्वयम्॥
(११५)

जड देह यसैभित्र चैतन्य ब्रह्म बस्तछ।
सञ्चालन गरी क्षेत्र साक्षी बनेर हेर्दछ॥
(११६)

ब्रह्मकै खेल हो सारा मान्छे निमित्तमात्र हो।
यसैकारण आत्माकै जगत् विवर्तमात्र हो॥
(११७)



# जिन्दगी घामछाया

छोरा जन्मे अति खुस भई जातकर्मादि गर्छौं,
जस्मा पर्छन् उपनय बिहा मुख्य हुन् पूर्ण गर्छौं ।
शिक्षा दीक्षा पनि सब सकी पुत्र पत्नी लिएर,
टाढा जान्छन् जनकजनकी बस्तछन् एक्लिएर ॥

(१)

आए छोरा कति दिन बिती पुत्र पत्नी लिएर,
आमा बाबा पुलकित भएर पुत्र आए भनेर ।
अर्पे श्रद्धा नमनसँगमा पाउमा नै परेर,
हाँसे सारा परिजनहरू मुग्ध साह्रै बनेर ॥

(२)

भेटे आफ्ना स्वजन र सुहृद् बन्धु आदि समस्त,
कोसेली जे जति पनि सके अर्पिए नै प्रशस्त ।
हाँसे खेले घुमफिर गरे शुद्ध यात्री बनेर,
फर्के चाँडै नियतिवश भै पुत्र पत्नी लिएर ॥

(३)

ल्याए छोरा, हँस मुख सधैँ वंश धान्ने प्रदीप,
ओ ! ली !! भन्थे जनकजननी तात भन्थे सुदीप ।
कान्छालाई सुमन मनको भन्दथे तात माया,
यी हुन् मिथ्या 'मम' अनि 'अहम्' बाट संसृष्ट छाया ॥

(४)

कोही भन्छन् जति लिन सक्यो उत्ति नै बढ्छ माया,
कोही भन्छन् जति दिन सक्यो त्यत्ति नै बढ्छ माया ।

आमा भन्छिन् सुत ! बस तिमी दिन्छु वात्सल्य माया,
बाबा भन्छन् जति भन तिमी लान्छ नै तानी माया ।।
(५)

छोरा जान्छन् परपर सधैँ आफूमै मस्त बन्दै,
आफैँमा नै अति रत भई बाह्य कोही नगन्दै ।
आमा रुन्छिन् तनयतनया संझिँदै दुःख मानी,
माया लान्छे पर पर सधैँ छालले छाल तानी ।।
(६)

आमाबाबा विरत अति भै मूक साक्षी बनेर,
हेर्छन् मात्रै जडसरि बनी नित्य टाढा बसेर ।
सम्झी सम्झी सकल रजनी दूर भै नीद माया,
मिथ्या सारा मम र ममता जिन्दगी घामछाया ।।
(७)

हामी आफ्नै करमफल नै जन्म पाएर खान्छौँ,
हामी आफ्नै नियतिवश भै भोग गर्छौं र जान्छौँ ।
हाँस्छौँ रुन्छौँ क्षणिक सपना यो सबै मोहमाया,
हाँसो आँसु रुदन र हँसी जिन्दगी घामछाया ।।
(८)

छोरा छोरी हुन त मुटुका टुक्रुकी हुन् तथापि,
बग्छन् खोलासरि अघि सधैँ फर्किंदैनन् कदापि ।
आमा आऊ अब यहीँ भन्दछिन् पोखी माया,
बाबा भन्छन् अब सब सहू जिन्दगी रामछाया ।।
(१०)



# मधुमास

गयो शिशिर अत्यन्त चिसो जड अमङ्गल ।
आयो झलझलाकार मधुमास सुमङ्गल ॥
(१)

पृथ्वीको सुषमा बोकी टुसाए बीजका कण ।
उठ्यो चमचमाएर सारा प्रकृति तत्क्षण ॥
(२)

तमान्ध जडता छैन छटा शुभ्र सबैतिर ।
आयो मधुरिमायुक्त मधुमास मनोहर ॥
(३)

यसको भाव उत्फुल्ल भईकन क्रमैसँग ।
पुग्यो चेतनमा सर्दै प्रभाव भावका सँग ॥
(४)

भाव नै मुख्य हो यल्ले बन्धमोक्ष गराउँछ ।
भावविहीन मान्छे त्यो हावामा नै हराउँछ ॥
(५)

सम्पूर्ण एषणा त्यागी भई निष्काम निर्मम ।
जगाऔँ ज्ञानको ज्योति त्यस्मै गरौँ परिश्रम ॥
(६)

आएथ्यौँ किन हो कैले जान्छौँ फेरि कतातिर ।
न बिर्सौं मूल सत्तत्त्व त्यही प्राप्तव्य आखिर ॥
(७)

विसंवादी भयौँ हामी संवादी एक सत्य हो ।
संवादी भ्रम यो सत्य विसंवादी असत्य हो ॥
(८)

आँखा खोलौँ उठौँ हामी ढिला अत्यन्त भैसक्यो ।
हाम्रो अप्राप्य यो योनि बिस्तारै क्षीण भैसक्यो ॥
(९)

हामी अत्यन्त नै तुच्छ तमान्ध पथका भ्रमी ।
विना उद्देश्य घुम्दैछौँ मिथ्या संसारमा रमी ॥
(१०)

उठ मानिस हो जाग तिमी सुत्छौ अझै कति ।
ब्रह्मज्ञानार्थ जाऊ लौ गुरुका साथ सम्प्रति ॥
(११)



# पत्रैपत्र

सानैदेखि भयौ परैपर तिमी यद्वा प्रवासी भयौ,
मायामोह हटेर हो कि किन हो ? अत्यन्त टाढा गयौ ।
पत्रैपत्र पढेर जागृत भई माया भए सत्त्वर,
छोडी मोह विदेशको अब तिमी फर्केर आऊ घर ॥

## पिताको उक्त पद्यात्मक पत्र पढेपछि भावुक भएर पुत्रले पितालाई लेखेको पद्यमय पत्र –

आमा बाबा दुवैलाई गर्छु साष्टाङ्ग वन्दना ।
भित्री हृदयबाटै नै सुस्वास्थ्य शुभकामना ॥
(१)

पत्रैपत्र पढेँ मैले बाबाको पत्र उत्तम ।
स्नेह आशिष पाएर छु आह्लादित आज म ॥
(२)

ममतामयि माताको ममताले परिप्लुत ।
स्नेहार्द्र पत्र जो पाएँ बाबाको स्नेहले युत ॥
(३)

सानैदेखि भएँ टाढा दुवै भर्खरकै हुँदा ।
सधैँ भर्खरकै ठान्थेँ स्वान्तमा छवि चम्किँदा ॥
(४)

बुझ्नै सकिन नै मैले मेरो कर्तव्य हो कुन ?
वृद्ध माता पिता छोडी म पर्देशी भएँ जुन ॥
(५)
म दूरदेशमा बस्छु सारै फर्कन दुस्तर ।
धर्म संस्कृति संस्कार आफ्नाबाट भई पर ॥
(६)
सपनामा सधैँ आमा बाबालाई म देख्तछु ।
बर्सिन्छन् आँसुका धारा जागा भएर छेक्तछु ॥
(७)
वृद्ध मातापिता मेरा अतीव रुग्ण भैकन ।
बस्नुहुन्छ प्रतीक्षामा म बस्छु दूर गैकन ॥
(८)
नसामा रक्त आमाकै बग्छ चल्दछ धड्कन ।
मांस छाला सबैमा छन् आमाकै धातुका कण ॥
(९)
अस्थि मज्जा सँगै ओज पिताजीकै मिलीकन ।
मेरो सबल भै चल्छ स्वस्थ निर्भय जीवन ॥
(१०)
पितृप्रसाद पाएर समग्र चल्छ जीवन ।
त्यसैकारण मानिन्छ तिरिन्न पितृको ऋण ॥
(११)

धेरै पढेर के हुन्छ धनी भएर हुन्छ के ?
वैज्ञानिक भई ठूलो नामै चलेर हुन्छ के ?
(१२)
मानसम्मान पाएर समृद्ध भई हुन्छ के ?
सम्पन्न राष्ट्र ठूलामा बस्न पाएर हुन्छ के ?
(१३)
जतातते सबै मिल्छन् मातापिता कतै पनि ।
मिल्दैनन् कहिल्यै फेरि भन्ने बुझ्दैछु मै पनि ॥
(१४)
बाहिरी सुख हो सानो भित्रको सुख हो ठुलो ।
स्वर्गीय सुखभन्दा ता आमाको काख हो ठुलो ॥
(१५)
आत्मीय सुख बिर्सेर खोज्दै बाहिर डुल्दछु ।
किन्तु स्नेहार्द आमाको नियानो काख भुल्दछु ॥
(१६)
पत्रैपत्र पढी मैले यथार्थ घरको बुझेँ ।
आमाबाबा दुवै वृद्ध रोगी भन्ने कुरा बुझेँ ॥
(१७)
चस्क्यो मन भएँ खिन्न भएँ भावुक तत्क्षण ।
काखमा शीघ्र फर्कन्छु सेवा गर्छु प्रतिक्षण ॥
(१८)



# जननी र जन्मभूमि

पिताको पत्र पाएर पत्रैपत्र पढीकन ।
पुत्रले पत्र जो लेखे पढेँ भावुक भो मन ॥
(१)
पत्रप्रेषकले जस्तै पितृप्रसाद लीकन ।
उठेको पुत्र यौटा हुँ म शिक्षित भईकन ॥
(२)
वृद्धमातापितालाई अलपत्र गरीकन ।
ऐले दूर बसेको छु परिवार लिईकन ॥
(३)
घरको खर्चले मैले पढेँ तर भएँ पर ।
गरी बाहिरको खर्च पर्दथ्यो फर्कनू घर ॥
(४)
त्यो पत्रैपत्र ता मैले पढेको छैन वस्तुतः ।
पुत्रका पत्रले मैले बुझेँ तात्पर्य तत्त्वतः ॥
(५)
पुत्रका पत्रमा आए मर्मान्तक कुरा जति ।
ती मेरै भावना सम्झेँ मर्माहत भएँ अति ॥
(६)

मैले पढेँ बुझेँ धेरै भन्ने जुन अहं थियो ।
पुत्रका पत्रले मेरो त्यो सारा नष्ट गरी दियो ॥
(७)

उउटै पत्रले मेरो सर्वांश स्वान्त झन्कियो ।
झन् पत्रैपत्र के होला ? भन्ने उत्सुकता भयो ॥
(८)

पत्रैपत्र म पढ्ने छु भन्ने सङ्कल्प त्यो लिएँ ।
दूरदृष्टि विना मैले बिर्सेको सरि नै थिएँ ॥
(९)

पिताका पुत्रले जस्तै सबै सुख भुलीकन ।
आमाको काख सम्झेर फर्कन्छु घर तत्क्षण ॥
(१०)



# मुहारपुस्तिका

फेस बूक अरू यन्त्र सारा विज्ञान उद्भव ।
सञ्चार यिनले गर्छन् ज्ञानको स्वच्छ वैभव ।।

(१)

यिनमा तर बिस्तारै अपभ्रंशहरू बढे ।
विकार प्रतिशोधादि अपशब्दहरू चढे ।।

(२)

अहङ्कार सँगै ग्राम्य अश्लील श्लील भैसके ।
संस्कार संस्कृति श्रद्धा डाँडो काटेर गैसके ।।

(३)

फोटो खिची जथाभावी भरेर यिनमा सब ।
हेर्नै मुस्किल भो आज कसरी हेर्नु यी अब ।।

(४)

कतै कुकुरले भुक्छ बिरालो म्याउँ गर्दछ ।
अर्धनग्ना कतै नारी देखिन्छन् लाज छर्दछ ।

(५)

होड फेसनमा ज्यादा घुम्नु बाहिर कारमा ।
खानु खेल्नु गरी जान्छन् दिन बाह्य विहारमा ।।

(६)

जे देखियो खिच्यो त्यो नै के हाल्नु उपयुक्त हो ?
यल्ले प्रभाव के पार्छ न सोच्नु नै अयुक्त हो ॥
(७)
पढ्नु लेख्नु सबै छोडी मोबाइल थिचीकन ।
कसरी उन्नति होला गरौँ यस्तर्फ चिन्तन ॥
(८)
ज्ञान बढ्ने कुनै शब्द लेखेर यसमा भरौँ ।
हे मेरा मित्र साथी हो ! विचार यसमा गरौँ ॥
(९)
मोबाइल टिभि ट्विटर् सधैँ थिची थिचीकन ।
गर्ने हो ! कसरी ज्ञान अद्वैत ब्रह्मचिन्तन ॥
(१०)



# भेटौँला फेसबूकमा

तनमा जीर्णता छायो मनमा अति विस्मृति ।
ढाक्यो बादलले आँखा हेर्न दुःख भयो अति ॥
(१)
किन्तु लेख्ने सँगै घुम्ने तृष्णा अझै छ चित्तमा ।
यसै कारणले हामी भेटौँला फेसबूकमा ॥
(२)
राखेर मनमा कालो देखिन्न बाह्य सुन्दर ।
मनको प्रतिबिम्बै हो असुन्दर र सुन्दर ॥
(३)
सच्चा मुहार देखिन्न कापट्य नहटेतक ।
मुहारपुस्तिका खोली मन यो नखुलेतक ॥
(४)
बाहिरी चेहरा हेरी मान्छे चिनिन्न भित्रको ।
चिन्नै नसकिने यौटा मान्छे प्राणी विचित्रको ॥
(५)
म लौ भएँ निकै मस्त कवितातर्फ गै मन ।
अब चिन्तनमा लाग्छु भेटौँला है कुनै दिन ॥
(६)

पद्यको लत लागेर गद्यतर्फ भयो कम ।
फर्कियो अब गद्यैमा बिस्तारै सकियो भ्रम ॥
(७)
धेरै दिन भएँ मस्त कविता वनिता मिली ।
मेरो वेदान्त नै सारा झन्डै नै उसले निली ॥
(८)



# कविता ऐना

के लेख्नु कविता मैले म केही कत्ति जान्दिन ।
आलोचना प्रशंसादि गर्दा म दुःख मान्दिन ॥

(१)

म स्वान्त सुखका लागि कविता काव्य लेख्तछु ।
फूल काँडा कुनै हुन्नन् खाली अक्षर लेख्तछु ॥

(२)

अरूलाई गरी लक्ष्य लेख्नु हुन्न म जान्दछु ।
निर्बोध कविता मेरा मेरै लागि म ठान्दछु ॥

(३)

मेरा यी अति नै साधा निर्बोध कविताहरू ।
आफ्नै मुहार ऐनामा हेर्ने साधन हुन् बरु ॥

(४)

कसैका लागि अत्यन्त मनमा फूल बन्दछन् ।
कसैका चस्चसी घोच्ने मनमा शूल बन्दछन् ॥

(५)

कविता भित्र यी छैनन् जस्को जे मनभित्र छ ।
फूल शूल दुवै बन्छन् ऐना काव्य विचित्र छ ।

(६)

कविता एक ऐना हो दृष्टिका भेदले गरी ।
आफैँ सदृश देखिन्छन् आफ्नो नै मुख नै सरी ।।

(७)

मुहार कविको हेरी कविता हुन्न सुन्दर ।
कविका कविताभित्र भाव चाहिन्छ सुन्दर ।।

(८)



# शुभ नववर्ष

नवीन वर्ष आरम्भ सधैँ हुन्छ वसन्त मै ।
पुराना वर्षको अन्त्य पनि हुन्छ वसन्तमै ॥
(१)
हाम्रो आफ्नै बनी बिम्ब नयाँ वर्ष उदाउँछ ।
कालकै गणना यो हो उदाउँछ हराउँछ ॥
(२)
कुसुमाकरका साथ नयाँ हावा चलाउँदै ।
नातिशीतोष्ण वेलामा यो झुल्किन्छ रसाउँदै ॥
(३)
फूलको पहिरी माला सुन्दै भ्रमरको जय ।
विजेता सरि झैँ आयो नवीन वर्ष निर्भय ॥
(४)
राजनेताहरू जस्तै नवीनरूप लीकन ।
सुखसमृद्धिको आशा जगाउँदै चिरन्तन ॥
(५)
देखिन्छ अनि अल्पन्छ यस्को छैन कुनै भर ।
उपायै अन्यथा छैन नपरी यसकै भर ॥
(६)
आशा विश्वास राखेर गरौँ स्वागत सुन्दर ।
शुभहोस् नव यो वर्ष बनोस् मङ्गलको घर ॥
(७)



# ब्रह्मानन्दसहोदर

बाहिरी दृश्य के राम्रो ? द्रष्टाको मन सुन्दर ।
भए बाहिर देखिन्छ दृश्य अत्यन्त सुन्दर ॥

(१)

देखिने बाहिरी दृश्य मनको प्रतिबिम्ब हो ।
मनोनाश भएदेखि प्रतिबिम्ब अबिम्ब हो ॥

(२)

कविले कविता लेख्छन् गरेर बाह्य वर्णन ।
मन स्वच्छ भए हुन्थ्यो कति सुन्दर वर्णन ॥

(३)

मनकै प्रतिछाया हो बाहिरी दृश्य के छ र ?
मनको स्वच्छता नै हो ब्रह्मानन्दसहोदर ॥

(४)

विश्वस्रष्टा उसैको हो काव्यसृष्टि मनोहर ।
दिव्यदृष्टि भएदेखि देखिन्छ सृष्टि सुन्दर ॥

(५)

भित्री दृष्टि खुलेमा नै जड देखिन्छ चेतन ।
पार्थक्य सब नासिन्छ अचेतन र चेतन ॥

(६)

ब्राह्मीसत्ता सबैतर्फ देखापर्छ झलामल ।
ब्रह्मैविवर्त हो सृष्टि अति सुन्दर निर्मल ॥

(७)

अनादि कविको यो हो कविता दिव्य सुन्दर ।
उसको दृष्टिको सृष्टि कहाँ हुन्छ असुन्दर ॥

(८)

दृष्टि शुद्ध भए लाग्छ सारा सृष्टि मनोहर ।
दृष्टि दुष्ट भए लाग्छ अँध्यारो नै सबैतिर ॥

(९)

दृष्टि शुद्ध हुँदाखेरि सृष्टिमा ब्रह्म भास्तछ ।
दृष्टिमा दोष आएमा अँध्यारो सृष्टि लाग्दछ ॥

(१०)

दृष्टि गोलक हो मिथ्या बाहिरी दृष्टि हो वृथा ।
दृष्टिका दोषले गर्दा देखिन्छ सृष्टि अन्यथा ॥

(११)

दृष्टि सृष्टि दुबैलाई चाहिन्छ मन सुन्दर ।
बाह्य पदार्थ मिथ्या हुन् चाहिन्छ भित्र सुन्दर ॥

(१२)

द्रष्टाको दृष्टि हो मुख्य दृष्टिमा हुन्छ निर्भर ।
शुद्ध दृष्टि भए मात्रै देखिन्छ सृष्टि सुन्दर ॥

(१३)

आमालाई गरी हेला सानीमा के रुचाउनु ?
सत्य सद्ब्रह्म बिर्सेर असत्‌मा के रमाउनु ?

(१४)

ब्राह्मी आँखा झलमल सधैँ विश्व सौन्दर्य देख्छन् ।
ब्राह्मी आँखा सकल घटका भित्रको भाव देख्छन् ॥
ब्राह्मी आँखा अतल मनको पुण्यपापादि देख्छन् ।
ब्राह्मी आँखा अनवरत नै जो छ सम्पूर्ण देख्छन् ॥

(१५)



# कविता वनिता

विता वनिता मेरी रातमा पनि आउँछिन् ।
मनमस्तिष्कमा मेरो बनेर भाव छाउँछिन् ।।

(१)

अत्यन्तै प्रेमका साथ नयाँ ऊर्जा जगाउँछिन् ।
प्रायशः यिनले आफ्नी सौता निद्रा भगाउँछिन् ।।

(२)

माध्वी सीधु पियाएर यिनी मस्त बनाउँछिन् ।
थुनी अद्वैतको ढोका द्वैतमात्रै रुचाउँछिन् ।।

(३)

कविता वनिता यौटी आउँछिन् र हराउँछिन् ।
कहिले ता अहोरात्रै लट्ठ पारी सुताउँछिन् ।।

(४)

कतिसम्म हुने लट्ठ प्रश्न चिह्न लगाउँछु ।
यस्मा छ मोहनी कस्तो ? फेरि प्रश्न उठाउँछु ।।

(५)

यसको हद नै छैन कतिसम्म रमाउने ।
सर्वोच्च रस छोडेर स्वल्पमा के रमाउने ?

(६)

पद्य हो गद्यकी सौता जब जान्छ उता मन ।
गद्यमा मन जाँदैन बरालिन्छ सधैँ मन ॥
(७)

कविता जब बर्सिन्छे वेदान्त तर्सिईकन ।
डाँडो काटी परै भाग्छ बिगारी यसले मन ॥
(८)

कवितातर्फ पल्केर सारै मुग्ध भयो मन ।
थुनेर कविताद्वार गर्छु वेदान्तचिन्तन ॥
(९)



# आमाका दूधका धारा

आमाका रक्तका धारा धमनी भित्र बग्दछन् ।
आमाका रक्तको भारा कसले तिर्न सक्तछन् ।
(१)
आमाका दूधका धारा नसामा नित्य बग्दछन् ।
आमाका दूधको भारा कसले तिर्न सक्तछन् ॥
(२)
आमाका अश्रुका धारा धर्तीमा नबगून् कबै ।
आमाका अश्रुधाराले बग्लिन् यी धरती सबै ॥
(३)
आमाभन्दा ठूलो वस्तु संसारमा कुनै छ र ?
पाइएलान् अरू वस्तु आमाको प्यार दुष्कर ॥
(४)
शिशु जन्माउँदा आमा प्रत्येक पल्ट मर्दछिन् ।
आफ्नै दूध पियाएर शिशु त्यो पुष्ट गर्दछिन् ॥
(५)
आफ्नै बलि चढाएर आफ्ना सन्तान पाल्दछिन् ।
आफ्नै सन्तानका निम्ति सारा जीवन फाल्दछिन् ॥
(६)
आमा हाँसे सबै हाँस्छन् धर्ती यो स्वर्ग बन्दछ ।
स्वर्गभन्दा ठुली आमा शास्त्रले पनि भन्दछ ॥
(७)



# झलामल

म नेता हैन नेपाली सामान्य हुँ डराउँछु ।
म ताली हैन हे मित्र ! गाली मन पराउँछु ॥

कविता काव्य वेदान्त म केही पनि जान्दिन ।
न जानिने हुँदै हैन असम्भव म मान्दिन ॥

साहित्य वेदवेदान्त साह्रै मन पराउँछु ।
प्रशंसा मान सम्मान देखिन् सधैँ डराउँछु ॥

सम्मान हो सुरापान अहम् रौरव नर्क हो ।
प्रतिष्ठा सुकरी विष्टा एषणा दुःख मार्ग हो ॥

आफ्नू नै कार्यको गर्नु प्रशंसा क्षुद्र काम हो ।
उपाधि कीर्ति सम्मान खोज्ने काम कुकाम हो ॥

श्लाघा पतनको गर्त कामना दुःखको घर ।
सबैदेखि उठी माथि बस्नु जीवन सुन्दर ॥

कामना तृप्त बन्दैनन् जे छ त्यस्मै रमाउनु ।
एकान्तमा बसी नित्य वेदान्तमै हराउनु ॥

यो भन्दा अरू के हुन्छ, प्राप्तव्य शुद्ध निर्मल ।
आनन्दधन सत्‌चित् हुँ आफैँ ब्रह्म झलामल ॥



# ज्ञान

त्यो अज्ञानी कति जनममा घुम्छ पाएर दुःख,
घुम्दै कैयौँ नर र पशुका योनिमा भोग्छ दुःख ॥
ब्यूँझाएरै यिनकन सधैँ दिन्छु सद्ज्ञान धेर,
पाउन् मुक्ति क्षय तम गरी ब्रह्म आफैँ बनेर ॥
(१)
म हुँ सत्‌चित् सदानन्द म हुँ ब्रह्मसनातन ।
मलाई कसले सक्छ ? गर्न खण्डन मण्डन ॥
(२)
म हुँ अखण्ड आनन्द प्रकाशको प्रकाशक ।
म स्वयं बिम्बको बिम्ब भासको पनि भासक ॥
(३)
मायाको पनि माया हुँ आज्ञानको म नाशक ।
सधैँ झलझलाकार सत्यको पनि शासक ॥
(४)
अखण्ड ज्योति सद्ज्योति पञ्चज्योति निरामय ।
मृत्युको हुँ महामृत्यु मृत्युञ्जय हुँ निर्भय ॥
(५)
ज्ञानको पनि सद्ज्ञान जो ज्ञानरूप त्यो बन्दछ ।
आफैँ ब्रह्म बनी उल्ले यसरी प्रस्ट भन्दछ ॥
(६)



# हामी के खोज्दै छौँ

बूढाबूढी अबल जनको पर्दथ्यो गर्नु सेवा,
उल्टै खोज्छौँ उनसँग सधैँ मान सम्मानसेवा ॥

बिर्सी आफ्ना झलमल सधैँ सभ्य संस्कार सारा,
खोज्दै हिँड्छौँ गहन तमका भित्र मिथ्या सहारा ॥

(१)

हामी बाहिर दौडिन्छौँ पाइन्न सुख बाहिर ।
आमाको काख छोडेर पाइन्न सुख बाहिर ॥

(२)

सभ्य संस्कार बिर्सेर असभ्य झैँ बनी अब ।
गर्छौं मान्यहरू हेला अमान्य बन्दछौ तब ॥

(३)

रूपयौवनले माती धनमा अति दी मन ।
मदमत्त भई हिँड्छौँ सीमा गरेर लङ्घन ॥

(४)

तुच्छ स्वार्थ अँगालेर वृद्ध मातापिता सब ।
अनाथालयमा फाली खोज्छौँ बाहिर वैभव ॥

(५)

हिँड्छौँ स्वार्थी भई हामी यो कति दिन चल्दछ ?
हामी सबै वृद्ध हुन्छौँ युवाले सोच्नुपर्दछ ॥
(६)

मान्यलाई गरी हेला उद्दण्ड अति भैकन ।
हिँड्दा कोही बडो हुन्न कोही बन्दैन सज्जन ॥
(७)

मनमा एउटा भाव बोलिने मुखले अरू ।
कार्यमा सर्वथा अर्कै गर्छौं नाटक नै अरू ॥
(८)

बहुव्यक्तित्व पालेर मूर्ख सम्भी अरू सब ।
बन्दछौँ नक्कली हामी छोडी सक्कल वैभव ॥
(९)



# चेतना

वसन्त ऋतुमा फुल्छ मनै सुमन भैकन ।
समस्त धरती झुल्छिन् फुलेर मस्त भैकन ॥
(१)
अन्तर्याम्याख्य चैतन्य पृथ्वीका गर्भमा पनि ।
फुल्छ त्यै फूल धर्तीमा फुल्छ मधुरिमा बनी ॥
(२)
मालीलाई परैदेखि भन्छ कुड्मल चेतन ।
आज ता फूलको पालो मेरो भोलि भनीकन ॥
(३)
स्थिरजङ्गम यो सृष्टि आत्माको नै विवर्त हो ।
जड चेतन जे जे छन् सबै ब्रह्मविवर्त हो ।
(४)
पारमार्थिक आभास व्यावहारिक मायिक ।
चैतन्यबाट नै चल्छन् ज्ञानविज्ञान भौतिक ॥
(५)
सापेक्षवाद विध्वंसी अणुविस्फोट वा बम ।
सारा चेतनबाट नै चल्छ सृष्ट्यादिको क्रम ॥
(६)

ब्रह्मकै चेतना सत्ता अनुस्यूत भईकन ।
सृष्टि नाश चलेका छन् क्रियाशील भईकन ।।
(७)
भए पश्चिममा विद्वान् वैज्ञानिक र चिन्तक ।
आइन्स्टाइन् तथा विग्नर् न्यूटन् पुटन् विचारक ।।
(८)
भए विज्ञानका धेरै पश्चिमी राष्ट्रमा पनि ।
थिए छन् र अझै हुन्छन् वैज्ञानिकहरू अनि ।।
(९)
कणाद गौतमाख्यादि अणुवादी सुचिन्तक ।
पूर्वमा पनि धेरै नै भए विज्ञानचिन्तक ।।
(१०)
चाहे आकाशमा हेरुन् पाताल र समुद्रमा ।
पृथ्वीका गर्भमा हेरून् भेटून् मङ्गल चन्द्रमा ।।
(११)
सबै नै ब्रह्मकै बिम्ब अथवा प्रतिबिम्ब हुन् ।
उसकै चेतना पाई अहं बोकेर हिँड्छन् ।।
(१२)



# अजरामर

हाम्रा दिनहरू जान्छन् फेरि नफर्कने गरी ।
पश्चिमाशा अँगालेर गएकी शर्वरी सरी ।।

(१)

जो छन् अत्यन्त नै अज्ञ जो छन् ज्ञानी परात्पर ।
सुखी छन् यी दुवै नित्य दुःखी किञ्चित् ज्ञ छन् तर ।।

(२)

के लेख्नु कविता मैले यो नशा सरि लाग्दछ ।
कविता जब वर्सन्छ रातको नीद भाग्दछ ।।

(३)

फलको आस छोडेर सत्कर्म गर्नु निश्चित ।
फलको आस गर्नाले मन बन्दछ दूषित ।।

(४)

प्रत्येक श्वासमा हामी दिऊँ ध्यान निरन्तर ।
श्वास हो जीवनाधार अरू आधार के छ र ?

(५)

मान्छेको श्वास हो प्यारो नत्र बेकार हुन् सब ।
प्राणशून्य जसै हुन्छ बन्छ यो देह नै शव ।।

(६)

को छ ? कालजयी प्राणी सुखी को छ ? सधैँभर ।
ज्ञानी जो छ सदाचारी त्यही हो अजरामर ।।

(७)



# खोजौँ सत्

देह नै केन्द्र हो मुख्य देहका निम्ति हुन् सब ।
देहका निम्ति हुन् सारा स्त्रीपुत्र धनवैभव ॥

(१)

देहकै लागि नै मैले गरेँ दुःख सधैँ भर ।
यो देह नै भयो भार पर्ने हो कसका भर ?

(२)

भरिए पेट देखिन्छ यो सारा सृष्टि सुन्दर ।
अन्यथा यो सबै फिक्का बाहिरी सृष्टि के छ र ?

(३)

अन्न हो देहको शक्ति अन्नै हो देह तत्त्वतः ।
अन्न जस्तै छ यो मिथ्या अरू क्यै छैन वस्तुतः ॥

(४)

पापपुण्य दुवै हुन्छन् देहबाटै यिनी सब ।
देह स्वस्थ भए मात्रै बाच्नु बन्दछ उत्सव ॥

(५)

देहका लागि हुन् पत्नी पति छोरा परिष्कर ।
देहशून्य जसै हुन्छ पति पत्नी सबै पर ॥

(६)

देह नश्वर हो हाम्रो नसम्झौँ अजरामर ।
चार्वाक तुल्य भै बाँच्नु हो बेकार सधैँ भर ।।

(७)

जानौँ यो देह हो मिथ्या न परौँ यसका भर ।
यो भन्दा पर होला क्यै खोजौँ सत् अजरामर ।।

(८)

यस्को आधार सत् वस्तु अतीन्द्रिय परात्पर ।
होला यै देहकै भित्र भन्ने सोचौँ निरन्तर ।।

(९)



# बाह्य दृश्य झलामल

शिशु हो कोपिला जस्तै युवा हो फूल सुन्दर ।
वैलिँदो फूल जस्तै हो वृद्ध जीर्ण र जर्जर ।।
(१)
शिशु जीवन आधार युवा हो उर्लंदो ज्वर ।
वृद्ध हो चरमावस्था अनन्त मोक्षको घर ।।
(२)
संस्कार शिशुमै पाए युवा लाग्छ सुमार्गमा ।
यी दुवै सप्रिए मात्रै वृद्ध पुग्छ सुमार्गमा ।।
(३)
हामी सुख सधैँ खोज्छौँ सुख मिल्छ कतै कतै ।
न खोजी सजिलै मिल्छ दुःख मात्रै जतातती ।।
(४)
जो खोज्दछ सधैँ बाँच्न अल्पायु तर बन्दछ ।
बाच्ने गर्दैन जो इच्छा उही दीर्घायु बन्दछ ।।
(५)
सत्कर्मै नगरी जल्ले दीर्घायु हुन खोज्दछ ।
त्यो अल्पायु सधैँ हुन्छ कहाँ खोजेर मिल्दछ ।।
(६)
मनको मल फालेर पारेर मन कोमल ।
हेरेमा सब देखिन्छ बाह्य दृश्य झलामल ।।
(७)



# आश्चर्य

फूलको म कुरा गर्छु ऊ काँडा नै रुचाउँछ ।
प्रकाशको कुरा गर्छु अँध्यारै तिर धाउँछ ॥
(१)
चैतन्यको कुरा गर्छु जडै मन पराउँछ ।
म ब्रह्मको कुरा गर्छु घृणा गर्छ हराउँछ ॥
(२)
संसारको कुरा गर्न धेरै मन पराउँछ ।
म वेदान्तको कुरा गर्छु सुन्नै पनि डराउँछ ॥
(३)
कस्तो आश्चर्य हो यस्तो आफ्नै आत्मा सँगै पनि ।
डराउँछ सधैँ भाग्छ अत्यन्त त्रस्त झैँ बनी ॥
(४)
प्रत्येक दिन मान्छेको मृत्यु देखेर नै पनि ।
चिरञ्जीवी सरी ठान्छ मृत्यु बिर्सेर तैपनि ॥
(५)
'अहम्' दुर्दम्य छातीमा फणा खोलेर बस्तछ ।
Narcissus मनमा पाली आफैँमा नित्य मस्त छ ॥
(७)
Sisyphus रथको चक्र जस्तै घुंछ सधैँभरि ॥
आफ्नो सञ्चिति बोकेर बाँच्छ ऊ जनमै भरि ॥
(८)



# सर्प

पालेर घरमा सर्प दूध खान दिईकन ।
राखेमा त्यसले टोक्छ भन्ने ठान्दैन सज्जन ॥
(१)
कृतघ्न खलले त्यस्तै उपकारी गुणीकन ।
आफ्नो स्वार्थ गरी पूर्ण धोका दिन्छ कुनै दिन ॥
(२)
बरु सर्प भलो होला हुन्न दुष्ट भलो तर ।
सर्पको औषधि हुन्छ हुँदैन खलको तर ॥
(३)
सपार्न खोज्छ ज्ञानीले सकेसम्म दिई भर ।
खल आफ्नो हुँदै हुन्न जति कोसिस नै गर ॥
(४)
'दुर्जनस्य च सर्पस्य वरं सर्पो न दुर्जनः ।
सर्पो दंशति काले तु दुर्जनस्तु पदे पदे ॥'
(५)
खलदेखि परै बस्नू पढेको नै भए पनि ।
सधैँ खल छुचो हुन्छ शिक्षा दीक्षा दिए पनि ॥
(६)
बाहिरी खलको हुन्छ अति रूप मनोहर ।
'मणिना भूषितः सर्प किमसौ न भयङ्करः ॥'
(७)



# भय

गयो शैशव खेलेरै जवानी मोजमै गयो ।
अदम्य कामना राखी धनका खोजमै गयो ।।

ऐले वृद्ध भई बाँच्छौँ रोग शोक लिईकन ।
चिकित्सक चिकित्सामा घुमेरै बित्तछन् दिन ।।

उच्च चाप र हृत् किड्नी फोक्सो जीर्ण लिई तन ।
रोग आक्रान्त भै बाँच्छौँ गरी औषधि सेवन ।।

हुँदा शक्ति र सामर्थ्य गयो भई बहिर्मुख ।
घुम्यौँ भएर संसारी खोज्दै संसारको सुख ।।

अहिले चेतना आयो मृत्यु सम्झेर झस्कियौँ ।
मातेर मदले पैले बिर्सेका सब नै थियौँ ।।

मृत्युको भय हो ठूलो सामान्य हुन् अरू भय ।
अभय ब्रह्मको ज्ञान गरे भइन्छ निर्भय ।।

यसका लागि ता पढ्नै पर्छ अद्वैत दर्शन ।
श्रोत्रिय ब्रह्मसद्ज्ञानी गुरुका साथ गैकन ।।

मोक्षार्थ ब्रह्मको ज्ञान गर्नुपर्दछ सत्त्वर ।
फेरि मनुष्यको जन्म पाउनै अति दुष्कर ।।



# जे लेख्छन् त्यही देख्तछन्

अगाडि अज्ञ संसारी जे देख्छन् त्यही लेख्तछन् ।
तर ज्ञानीहरू पैले देख्तछन् पछि लेख्तछन् ॥

(१)

यात्रा हो जिन्दगी मेरो क्षुद्रक्षणिक चञ्चल ।
चौतारी घर हो मेरो यो हो  विश्रामको स्थल ॥

(२)

साथी साथ कुनै हुन्न यात्रामा हुन्न सम्बल ।
जानुपर्दछ बोकेर आफ्नै दुष्कर्मको फल ॥

(३)

न यो भोगिन्छ नै यद्वा न फ्याँकिन्छ कतै तिर ।
न यो देखिन्छ आँखाले न यस्का पाउँछन् शिर ॥

(४)

कण्टकाकीर्ण बाटोमा एकाकी हिँड्नुपर्दछ ।
हिंसालु जन्तुको त्रास सामना गर्नुपर्दछ ॥

(५)

त्यागको म कुरा गर्छु पाए उपाधि बोक्तछु ।
घमन्ड र अहङ्कार अरू छोड्छन् म बोक्तछु ॥

(६)

मेरा शास्त्रहरू माता पिता ब्रह्मज्ञ हुन् गुरु ।
माता पिता दुवै द्वारा भयो वेदान्तको सुरु ॥
(७)

पुत्र वित्त र लोकादि एषणाले गरीकन ।
आज संसारमा घुम्छु अति क्षुब्ध बनीकन ॥
(८)

बाहिरी दृश्यमै मग्न हुन्थेँ झुम्थेँ उतैतिर ।
अब ती सब छोडेर नित्य धाउँछु मन्दिर ॥
(९)



# दिनचर्या

सम्पूर्ण गुणले पूर्ण यौटै दुर्गुणले गरी ।
मनुष्य हेय ठानिन्छ दुर्गन्धी लसुनै सरी ॥
(१)
गोष्ठी सभा बिहा भोज निम्तामा अघि धाउँथेँ ।
गीत सङ्गीत नृत्यादि सारै मन पराउँथेँ ।
(२)
बिस्तारै ती छुटे ऐले अस्पताल म धाउँछु ।
चिकित्सक र वैद्यादि भेटी शुल्क बुझाउँछु ॥
(३)
पहिले गुरुकाँ जान्थेँ शास्त्र सुन्थें म लेख्तथेँ ।
सारा सम्म थिए मेरा सबै ब्रह्मज्ञ ठान्दथें ॥
(४)
कालले सब बिस्तारै छुटे म नै भएँ पर ।
घर घाट र वेदान्त मेरा गम्य भए तर ॥
(५)
दुइटै सुखी हुन् अज्ञ यद्वा ज्ञानी निरन्तर ।
बीचका तर दुःखी हुन् भन्छन् शास्त्रादिले तर ॥
(६)



# नव वेदान्त

केही अज्ञहरू भन्छन् हामी शास्त्रज्ञ हौँ भनी ।
जान्दछौँ वेद सम्पूर्ण अर्थ वेदाङ्ग नै पनि ॥
(१)
छानेका मन्त्र ती घोक्छन् अर्थ नै नबुझीकन ।
सर्वज्ञ आफु हौँ ठान्छन् अज्ञ हुन् तर ती जन ॥
(२)
आफैँ हामीहरू भन्छौ हामी वैदिक हौँ भनी ।
केही मन्त्रहरू घोक्छौँ अनि भन्छौँ कनी कनी ॥
(३)
अर्थ बुझ्नु परै जाओस् स्वर सार कहाँ कता ?
उच्चारण सबै भ्रष्ट अशुद्धिपूर्ण सर्वथा ॥
(४)
अपौरुषेय हो वेद यस्का अर्थ असङ्ख्य छन् ।
अनादि यसको अर्थ कसले बुझ्न सक्तछन् ?
(५)
जथाभावी गरी अर्थ कुठाउँ ठाउँ बोल्दछौँ ।
आफ्नो अज्ञानको पोल आफैँ निर्लज्ज खोल्दछौँ ॥
(६)

‘गणानान्त्वा’ भनी मन्त्र बोल्छौँ गणेशको भनी ।
घोडाको प्रार्थना हो त्यो बुझ्दैनौ अर्थ तैपनि ॥
(७)
‘स्थिरो भव’ भनी मन्त्र बोल्छौँ दीप जलाउँदा ।
प्रार्थना हो गधाहाको भन्ने थाहा नपाउँदा ॥
(८)
‘वरुणस्य’ भनी मन्त्र जलेश निम्ति बोल्दछौँ ।
स्वैलाको प्रार्थना त्यो हो आफ्नै अज्ञान खोल्दछौँ ॥
(९)
यस्ता मन्त्रहरू धेरै बोल्दछौँ नबुझीकन ।
बुझ्ने प्रयास गर्दैनौँ बस्छौँ अज्ञ बनीकन ॥
(१०)
जुन दर्शनले वेद आलोडन गरी सब ।
लिएर वेदको सार पढी उपनिषद् सब ॥
(११)
गर्‍यो अद्वैत वेदान्त निर्माण दिव्य दर्शन ।
भविष्यद्वृत्ति दर्साई गर्‍यो अपूर्वचिन्तन ॥
(१२)
त्यसै शाश्वत प्राचीन वेदान्तलाई क्वैजन ॥
भन्दछन् नव वेदान्त पूर्वाग्रह लिईकन ॥
(१३)

अपौरुषेय सर्वोच्च अद्वैत श्रुतिसम्मत ।
वेदान्त कसरी हुन्छ नवीन अज्ञसम्मत ॥
(१४)
अथवा जो सधैँ नै छ शाश्वत श्रुतिदर्शन ।
त्यसै कारण हो यद्‍वा भनेको नव दर्शन ॥
(१५)
प्रत्येक क्षणमा नौलो नवीन जुन बन्दछ ।
त्यही नै वस्तुलाई नै नवीन भन्नु पर्दछ ॥
(१६)
अनादि वेदद्वारा नै उद्‍घोषित र वर्धित ।
स्वतः प्रमाण वेदान्त विश्वजनीन ऊर्जित ॥
(१७)
सधैँ नूतन हो साक्षात् मुक्तिप्राप्त्यर्थ साधन ।
अज्ञ द्वैती त्यसै मर्छ कुतर्क नै गरीकन ॥
(१८)



# सभ्य संस्कार

कमाउने लिने खाने लिई भौतिक दर्शन ।
तिमी यो युगमा बाँच्छौ पूर्ण चार्वाक भैकन ।।
(१)
कता ईश्वरको भक्ति कता आत्मिक दर्शन ।
कता वेदान्तको चर्चा कता दर्शन चिन्तन ।।
(२)
वृद्ध सेवा भयो टाढा पारिवारिक जीवन ।
संस्कार मान्यता हाम्रा बन्दै गए विखण्डन ।।
(३)
कसका साथमा गर्ने भित्री चीत्कार क्रन्दन ।
अब ता भन्नु नै व्यर्थ होला अरण्यरोदन ।।
(४)
प्रसाधन भयो ऐले गर्नु अङ्गप्रदर्शन ।
अर्ध नग्न भई हिँड्नु बन्दै गो सभ्यदर्शन ।।
(५)
पुराना युगको जस्तो बन्दै गो प्राच्य संस्कृति
कैल्यै पुरानु बन्दैन सभ्य संस्कृत संस्कृति ।।
(६)



# कसरी मोक्ष पाउँछ

अहङ्कार मुठीभित्र लिएर  जुन हिँड्दछ ।
नमस्कार कठै उल्ले कसरी गर्न सक्तछ ?

(१)

नगरेर नमस्कार कसरी झुक्न सक्तछ ?
न झुकी गुरुका सामु कसरी पुग्न सक्तछ ?

(२)

गुरु नै नभई अज्ञ कसरी ज्ञान पाउँछ ?
विना ज्ञान त्यसै उल्ले कसरी मोक्ष पाउँछ ?

(३)

मोक्ष नै न भए उल्ले जन्ममरण पाउँछ ।
विभिन्न योनिमा घुम्दै अत्यन्त दुःख पाउँछ ।।

(४)

कैल्यै सकिन्न दुश्चक्र करोडौँ जन्ममा पनि ।
चौरासी लाखमा घुम्छ भ्रमी बनेर फन्फनी ।।

(५)



# संवेदना पर भयो

देखिन्छ सम्भ्रम अशान्ति र अस्तव्यस्त,
यो देह भो गलित सुस्त र दैन्यग्रस्त ।
हामी भयौँ भ्रमित शान्ति र चैन भाग्यो,
संवेदना जड भयो कि त ! दूर लाग्यो ॥
(१)

आचार संस्कृति र धर्म समेत भागे,
संस्कारहीन अपसंस्कृति आइलागे ।
भाषा म सुन्दछु नयाँ अनुहार देख्छु,
आफ्नै स्वदेश नव लाग्छ जता म टेक्छु ॥
(२)

सारा नवीन सरि लाग्छ जता म जान्छु,
आफ्नै स्वदेश किन हो ? परदेश ठान्छु ।
अत्यन्त सम्भ्रमित भै म अचम्म मान्छु,
यद्वा पसेँ कि अरुका घरभित्र ठान्छु ॥
(३)

हामी गयौँ अब पलायन तर्फ सारा,
बिर्सेर भू र जननी शुभ भावधारा ।
आफैँ भयौँ कि ! अब दुर्व्यसनाभिलाषी,
सम्भ्रान्त दिग्भ्रमित वा कि ! भयौँ विलासी ॥
(४)

हामी प्रवासनमुखी क्रमले भएछौँ,
आफ्नै स्वका अब विसर्जनमा गएछौँ।
हामी पराङ्मुख भई कि त भाग्न लाग्यौँ,
यद्वा स्वजन्म जननी अब त्याग्न लाग्यौँ॥
(५)

दुर्भावना दुरति उग्र बढेर आयो,
सौहृद्य सख्य शिव शान्ति सबै हरायो।
सम्बन्ध मात्र उपचारित भो समस्त,
संवेदना अब भयो क्रमसाथ अस्त॥
(६)

हामी सबै दमित दुर्धर दैन्य पाली,
हिँड्छौँ भिरेर भय निर्भय दूर फाली।
बन्छौँ भ्रमी भ्रम लिई भ्रमबाट भ्रान्त,
हाम्रो छ भित्र मन चञ्चल भै अशान्छ॥
(७)

कुण्ठा दुराग्रह दुराशय पाल्न थाल्यौँ,
हाम्रा सुसभ्य समता सब फाल्न थाल्यौँ।
हामी बहिर्मुख भई सब डुल्न थाल्यौँ,
हाम्रो सुसभ्य शुभ संस्कृति भुल्न थाल्यौँ॥
(८)



# अहं मम

मेरो अहं छ अति उच्च म ठान्छु सान,
सम्झी यही धन सुरक्षण गर्छु जान ।
आएँ यहाँ किन म लौ कुन कर्मबाट,
जाने कहाँ र कहिले कुन मार्गबाट ॥

(१)

बोकी सबै तिर म घुम्दछु साथ मैं मैं,
कैल्यै म छोड्दिन म यै सँग झुम्छु मैं मैं ।
मेरो म हो मम मता मसँगै म साँच्छु,
मेरो गयो मम भने कहिले म बाँच्छु ॥

(२)

आएँ अहं मम लिई म भएर मान्छे,
माया यही मम समेत मलाई तान्छे ।
अध्यास हो मम अहं सब जान्नलाई,
मैले प्रयास न गरें न गरें पढाई ॥

(३)

मैंको छ राज्य सब तर्फ म मात्र देख्छु,
जे लेख्छु आग्रह लिई मम मात्र लेख्छु ।
जे देख्छु दूर नभमा प्रतिबिम्ब देख्छु,
आयो घुमी नवीन वर्ष म आफु देख्छु ॥

(४)

आयो नयाँ वय लिएर नवीन वर्ष,
छर्दै समग्र धरतीभरि पूर्ण हर्ष ।
जस्को सुदृष्टि छ चराचर रम्य देख्छ,
जस्को कुदृष्टि छ सुरम्य कुरम्य देख्छ ॥
(५)

हो मुख्य कारण अहं ममजन्य दृष्टि,
त्यैबाट गर्छु म सधैँ तमजन्य सृष्टि ।
अज्ञान आवृत मले सब गर्छ नाश,
हो दुःखहेतु म अहं निज कर्मपाश ॥
(६)



# म हुँ अज्ञ

केही म जान्दिन म अज्ञ हुँ अल्पबुद्धि,
पाली अहं मम म हिँड्दछु ली कुबुद्धि ।
कुण्ठा छ भित्र मनमा अति उग्र कालो,
बाँच्तो छु आत्मरतिमा लिई क्षुद्र जालो ॥
(१)

सम्पत्ति शक्ति पदबाट भई म मत्त,
घुम्दो छु निर्भ्रम सबैतिर भै प्रमत्त ।
क्वै छैन मै सरह सर्वसमर्थ जान्ने,
सम्झन्छु हुन् नर अरू जड यी नजान्ने ॥
(२)

आफैँ अहं र ममबाट म घेरिँदो छु,
सम्बन्ध मोह लहरा सँग बेरिँदो छु ।
झन् कस्सिँदो छ दृढ दुर्जय मोहपाश,
निस्तार देख्तिन कतै छु सधैँ हताश ॥
(३)

बिस्तार घाम अब पश्चिमतर्फ लर्के,
सन्ध्या सँगै तिमिर सम्भ्रम फेरि फर्के ।
आफ्ना समस्त कर सुस्त सबै समेटी,
ध्यानस्थ भै रवि डुबे रजनी लखेटी ॥
(४)

त्यस्तै म आज सब ऐहिक कर्म रोकी,
खोज्दैछु भित्रतिर पस्न सुरूप बोकी ।
चाहन्छु नास्न सब सञ्चित कर्मधारा,
एक्लो हुने छ मन ली समको सहारा ॥
(५)

देखिन्छ बाहिर तमोमय कृष्णरूप,
देखिन्छ भित्रतिर झल्मल चित्स्वरूप ।
आफ्नो स्वरूप जुन हो सब बिर्सिएर,
मेरो गयो नरजुनी तममै फसेर ॥
(६)

नृजन्म हो सकलमा अति नै विशेष,
यैबाट पाउन सकिन्छ परात्परेश ।
जानेर तत्त्व सम आन्तर चक्षु खोली,
ध्यानस्थ भै बसुँला मूक भै नबोली ॥
(७)

मिथ्या र गौण पछि भित्र छ मुख्य आत्मा,
भित्रै छ देख्न तर मुस्किल मुख्य आत्मा ।
फ्याँकेर आवरण भित्र पसेर खोजौँ,
हो मोक्षसाधन यही यसलाइ रोजौँ ॥
(८)



# नाट्यशाला

यो विश्व हो सकल मञ्चसमान एक,
हौँ पात्र मात्र यसभित्र सबै अनेक ।
खेल्छौँ यहाँ विविध खेल लिएर चाख,
छौँ पात्र धेर यसभित्र हजार लाख ॥
(१)

खेल्छौँ यहाँ सकल रूप लिएर नाना,
हामी बुढा तरुण छौँ कति छौँ ससाना ।
खेल्ने छ पाठ कसको कति बेरसम्म,
तोक्छन् उनै प्रभु अदृश्य भई अचम्म ॥
(२)

हाँस्छौँ कुनै सकल दर्शक मुग्ध पारी,
रुन्छौँ कुनै धरधरी भल आँसु झारी ।
खेल्छौँ सबै नियतिका वशमा परेर,
पर्दा झरे पछि हिँडिन्छ सबै छुटेर ॥
(३)

यो खेलामा क्रमसँगै नव पात्र आई,
खेल्छौँ अनेक रङ्का परिधान लाई ।
कोही धनी कति गरीब सरी बनेर,
नाच्छौँ अनेकविध नाच सँगै मिलेर ॥
(४)

ठूला बनीकन कुनै त्यसमै हराई,
गर्छौं प्रशासन गरीबहरू कजाई ।
स्वप्ना समान सब नाटक हो तथापि,
लाग्दैन हो भ्रम भनी मनमा कदापि ॥
(५)

हामी सबै नियतिका पुतली बनेर,
नाच्छौँ सबै नट नटी सरहै जमेर ।
यै चालले जुनि बिते यसमै भुलेर,
थाहै हुँदैन बहुधा भ्रम हो भनेर ॥
(६)

सद्भासदेखि पर छौँ र हराउँदा छौँ,
आभासमै रत भएर रमाउँदा छौँ ।
हामी गयौँ स्वसँग दूर भई हराई,
हाम्रो यथार्थपन आज भयो पराई ॥
(७)



# म भएँ उदास

संसार हो क्षणिक दुस्तर मोह माया,
स्वप्ना समान अति विभ्रम घाम छाया ।
छैनन् कुनै पनि यहाँ मित मित्र खास
छन् स्वार्थमा रत सबै म भएँ उदास ।।
(१)

विश्वास कोसँग गरौँ ? सब छन् पराई,
छन् स्वार्थमग्न बहुधा सब बन्धु भाइ ।
विश्वासिलो मसित मानिस छैन खास,
देखी यथार्थ अहिले म भएँ उदास ।।
(२)

बोल्दैन मानिस कुनै पनि भित्रबाट,
बोल्यो भने पनि त बाहिर ओठबाट ।
देखिन्छ कृत्रिम सधैँ व्यवहार खास,
बुझ्दै गएँ जति अझै म भएँ उदास ।।
(३)

देखिन्छ बाहिर मनोहर हाउभाऊ,
भित्री छ लक्ष्य सबको वकतुल्य दाउ ।
छन् दृश्यमा मगन बाहिर तर्फ खास,
देखेर यो जडपना म भएँ उदास ।।
(४)



# गुरुवन्दना

ब्रह्मिष्ठ मेरा गुरुले मलाई,
वेदान्त विज्ञान दिए पढाई ।
ती पारदर्शी गुरु गोपमा म,
सश्रद्ध भै गर्छु सदा प्रणाम ।।
(१)

अज्ञानको ध्वान्त धुँवा भगाई,
जल्ले दिए ज्ञान दियो जगाई ।
दिए सहारा जसले मलाई,
प्रणाम मेरो गुरु पद्मलाई ।।
(२)

जानेर नै जान्दिन कत्ति भन्छन्,
अमानी भै जो गुरु मान दिन्छन् ।
हुन्नन् उनी ज्ञान भई प्रमादी,
मेरा तिनै हुन् गुरुजी अनादि ।।
(३)

अल्पज्ञ भै तै पनि विज्ञ बन्छु,
कुतर्क गर्दै न हुँदो म भन्छु ।
वेदान्त विज्ञान विना म विज्ञ,
सद्ज्ञानले शून्य म मूढ अज्ञ ।।
(४)

पढेर नै दोष दिए मलाई,
हुनेछ यल्ले सबको भलाइ ।
केही न पढ्दै गुण दोष आदि,
भन्नेहरू केवल हुन् प्रमादी ॥
(५)

लेखिन्छ वेदान्त र काव्य आदि,
विद्वान् बताऊ नबनी प्रमादी ।
निर्दुष्ट बन्ला त्यसबाट सृष्टि,
विद्वान् गरुन् जाँच ली शुद्ध दृष्टि ॥
(६)

वाहा ! वाह ‼ प्रशंसा जुन मान्छ राम्रो,
बिगार्छ त्यल्ले विष हो नराम्रो ।
त्यही पिई सर्जक हुन्छ मस्त,
बाटो बिराई पछि हुन्छ अस्त ॥
(७)

म मान्छु राम्रो जति दोष लाऊ,
चरित्र नाङ्गो गर बात लाऊ ।
मेरा जति दुर्गुण छन् सुनाऊ,
मेरो प्रशंसा कहिल्यै नगाऊ ॥
(८)



# कविता दृष्टि सृष्टि हो

कविता कविको सृष्टि दृष्टिको प्रतिबिम्ब हो ।
कविका मनको भाव झल्कने कविबिम्ब हो ।।

कविता दृष्टिको सृष्टि त्यसमा कवि बोल्दछ ।
प्रसुप्त कविको अन्तस् लेखनीले उगेल्दछ ।।

कविको दृष्टि जस्तो छ कवि त्यै पोख्छ बाहिर ।
आफ्नो दमित आकाङ्क्षा कवि पोख्छ निरन्तर ।।

भए कलुष अन्तस्मा सोही बाहिर आउँछ ।
रोपेर विषको वृक्ष कहाँ अमृत पाउँछ ?

सक्कली कविले वर्ष गन्दैन काव्य भन्दछ ।
नक्कली कविले मात्रै लेख्तैन वर्ष गन्दछ ।।

कविले काल नै जित्छ कहाँ ऊ वर्ष गन्दछ ।
मृत्युलाई दिँई हाँक अजरामर बन्दछ ।।



# के लेख्ने भाव नै विना

कविजी क्रान्तदर्शी हुन् ती तीनै काल देख्तछन् ।
अरूले जुन देख्तैनन् उनी त्यो सब देख्तछन् ।।

जे देख्छन् सब ती लेख्छन् नदेखे पनि लेख्तछन् ।
लेख्नु नै उनको धर्म सर्वदा कवि लेख्तछन् ।।

भाव हो काव्यको आत्मा त्यो भाव हुनुपर्दछ ।
त्यल्ले भावुकको अन्तस् चसक्क छुनुपर्दछ ।।

स्वच्छन्दवादमा भाव अत्यन्त तल पर्दछ ।
स्वच्छन्दी कविले मिच्तै जेसुकै पनि गर्दछ ।।

लच्छेदार भरून् शब्द अलङ्कारहरू भरून् ।
माधुर्य रसले पूर्ण सीधुका द्रवले भरून् ।।

मनमुग्ध हुने राग अलापी कविता भनून् ।
हाउ भाउ निकालेर श्रोता मुग्ध गरी भनून् ।।

कविको भाव निर्दुष्ट भएमा त्यो अमूल्य हो ।
सुवर्ण भित्र स्रष्टाले सुगन्ध भर्नु तुल्य हो ।।

जे जस्तो वृत्तिमा लेखून् सशक्त हुनुपर्दछ ।
कविता प्राणवान् बन्न निर्दुष्ट हुनुपर्दछ ।।



# भोलिको छैन है भर

भो भयो कति कुद्ने हो ? विना होस निरन्तर ।
लिऊँ विश्रान्ति क्यै बेर हेरौँ क्षितिजमा पर ।।

कुदेर मात्र भेटिन्न अहोरात्र गरी श्रम ।
कुद्छौँ अभीष्टका निम्ति पालेर मनमा भ्रम ।।

मनमा एषणा तृष्णा पालेर दूरतिक्रम ।
विना होस कुदेका छौँ विना लक्ष्य गरी श्रम ।।

भ्रम ता मृगतृष्णा हो सारा दृश्य मरुस्थल ।
खोजेर मरुधर्तीमा कसरी पाउने जल ।।

भ्रम पाली विसंवादी मात्र दौडी ससम्भ्रम ।
अभीष्ट प्राप्ति के होला ? गरौँ जति परिश्रम ।।

कैयौँ जन्म बिते हाम्रा लिँदै जन्म थरी थरी ।
कहिले चरमा पुग्छौँ हिँडछौँ चैतन्यले गरी ।।

कहिले क्षुद्र जन्तु भै जन्मन्छौँ अनि मर्दछौँ ।
पार पाउन गाह्रो छ दुश्चक्र भित्र पर्दछौँ ।।

चौरासी लाख दुश्चक्र हामीले घुम्नुपर्दछ ।
अर्को उपाय नै छैन श्रुतिले पनि भन्दछ ।।

त्यसै कारण दुश्चक्र शास्त्रले भन्छ दुस्तर ।
आजै उठौँ बनौँ मुक्त भोलिको छैन है भर ।।



# एक्लै नै जानुपर्दछ

मान्छे आउँछ एक्लै नै एक्लै नै जानुपर्दछ ।
आफ्नू सञ्चिति जस्तो छ त्यही नै लानुपर्दछ ॥

जस्को प्रारब्ध जस्तो छ यहाँ त्यै भोग्नुपर्दछ ।
अव्यक्तबाट निर्दिष्ट भएर घुम्नुपर्दछ ॥

पत्नी वा पति पुत्रादि कोही जाँदैन साथमा ।
सबै क्षणिक हुन् हाम्रा नातागोता यथार्थमा ॥

नदीका भेलमा बग्ने असङ्ख्य बालुका कण ।
भेटिन्छन् अनि छुट्टिन्छन् हुन्छन् सङ्गम क्यै क्षण ॥

त्यस्तै हामी सबै मिल्छौँ हाँस्छौँ रुन्छौँ रमाउँछौँ ।
आफ्ना नियतिका साथ छुट्टिन्छौँ र हराउँछौँ ॥

यो सारा जड संसार मिथ्या हो पाञ्चभौतिक ।
आत्मा चेतन हो एक नित्य सत्य अभौतिक ॥

पारमार्थिक सद्वस्तु ब्रह्म सत् चित् सनातन ।
प्रतिबिम्ब उसैका हौँ हामी जीव चिरन्तन ॥

पारमार्थिक यै नै हो बुझ्नुपर्ने यथार्थतः ।
यो बुझेपछि नै हुन्न शोकमोहादि वस्तुतः ॥

अन्यथा ममले यद्वा अहंले नै फँसाउँछ ।
अन्त्यमा यसले फेरि चौरासीमा घुमाउँछ ॥



# सोम शर्मा पिता

हुँदा शक्ति सबै फ्याँकें मिथ्या संसारका तिर ।
लागेँ आज म बूढो भै भक्ति वेदान्तका तिर ॥

इन्द्रियादि सबै नै हुन् मायाका सब छाउरा ।
विषयैतर्फ यी तान्छन् यी माग्छन् व्यर्थका कुरा ॥

द्वन्दात्मक छ संसार द्वन्द्वमात्र बढाउँछे ।
सुख दुःख र रागादि बढाएर सढाउँछे ॥

बाहिरै तर्फ तानेर लान्छे माया डुलाउँछे ।
भित्र पस्न दिँदै दिन्न संसारमै भुलाउँछे ॥

आएपछि सबै हामी जानैपर्छ सुनिश्चित ।
आएका हौँ कहाँबाट कहाँ जाने अनिश्चित ॥

तेरो मेरो अहं ईर्ष्या मनमा जबसम्म छ ।
चारैतर्फ भयै मात्र मान्छेमा तबसम्म छ ॥

उज्यालो चाहना गर्छु अँध्यारोतर्फ धाउँछु ।
मरुभूमि चहारेर कहाँ म नीर पाउँछु ॥

मुक्तिको कामना गर्छु भुक्ति मन पराउँछु ।
म भ्रान्त चित्त बोकेर कहाँ निस्तार पाउँछु ॥

भक्ति ज्ञान विना मुक्ति खोज्नेमा पहिलो म हुँ ।
कल्पना लोकमा रम्ने सोम शर्मा पिता म हुँ ॥



# अमूल्य क्षण

अमूल्य क्षण यी हाम्रा हातबाट गई सके ।
वर्तमान हराएर भूतकाल भई सके ।।

एकै क्षण पनि व्यर्थ नफालौँ यो अतुल्य छ ।
सारा सम्पत्ति खर्चेर पाइन्न यो अमूल्य छ ।।

सारा साम्राज्य खर्चेर क्षण खोज्ने सिकन्दर ।
आमाको मुख हेरेर मर्ने इच्छा लिए तर ।।

उनले क्षण पाएनन् साम्राज्य खर्चिए पनि ।
जिती साम्राज्य के पाए ? गए ती हरुवा बनी ।।

एकै क्षण त्यसै फ्याँके पाइन्न फेरि सो क्षण ।
क्षणको मूल्य नै छैन अमूल्य त्यसकारण ।।

प्रत्येक क्षण हाम्रा यी नफ्याँकौँ व्यर्थमा अब ।
भक्ति सद्ज्ञानमा लाऊँ यै हो सार्थक वैभव ।।

साथ संसारका वस्तु जाँदैनन् सब छुट्तछन् ।
भक्ति सद्ज्ञानले प्राप्त वस्तु नै साथ जुट्तछन् ।।

मिथ्या मायिक सम्पत्ति जाँदैन पछि साथमा ।
सद्भक्ति ज्ञानले प्राप्त आनन्द जान्छ साथमा ।।



# चिति

चाहन्थे चितिको गर्न ती चिन्तन जनार्दन ।
ती भए चिति नै ऐले सच्चिद् ब्रह्म सनातन ।।

त्यसै विषयमा गर्छु अब सङ्क्षिप्त चिन्तन ।
सर्वश्री चितिमा गर्छु नमस्कार समर्पण ।।

'चितं चिदिति जानीयात् तकाररहितं यदा ।
तकारो विषयाऽध्यासो जपारागो यथा मणौ ।।'

चिति संज्ञान इत्यादि यसका रूप धेर छन् ।
अरूप तत्त्वतः यो हो मायाले धेर बन्दछन् ।।

चित्त हो चिति नै जैले तहीन बस्छ यो बनी ।
त हो विषय अध्यास जपाको रक्त झैँ मणि ।।

चिति हो ब्रह्म चित् शक्ति अद्वैत शुद्ध चिद्घन ।
चितिको चेतना पाई चल्छ विश्व चिरन्तन ।।

चिति बाहिर देखिन्न सबैका भित्र बस्तछ ।
ज्ञानीले सबमा देख्छ अज्ञमा तर अस्तछ ।।

प्राणी प्रत्येकका भित्र प्रतिबिम्ब भई चिति ।
रक्तका बिन्दुका भित्र सूक्ष्म घुम्छ सधैँ चिति ॥

चिति चित् हो परब्रह्म सद्वस्तु श्रुति भन्दछ ।
ईश जीव जगत्को यो सर्वकारण बन्दछ ॥

कति गरौँ ? म यहाँ अरू वर्णन,
सुन त सङ्ग्रह अद्वयशासन ।
सकल वाङ्मनदेखि छ चित् पर,
सकल वाङ्मन साथ छ चित् तर ॥



# ठूलो आश्चर्य

अहन्यहनि भूतानि गच्छन्तीह यमालयम् ।
शेषाः स्थावरमिच्छन्ति किमाश्चर्यमतःपरम् ।।
– महाभारत वनपर्व ३१३ । ११४

प्रत्येक दिनमा प्राणी जान्छन् नै यमका घर ।
बाँकी अमर भैँ ठान्छन् यो हो आश्चर्य दुस्तर ।।

कोही अजम्बरी हुन्नन् सबैले जानुपर्दछ ।
कमाई पाप या पुण्य साथमा लानुपर्दछ ।।

प्रारब्ध कर्मले योनि, भोग, आयु दिलाउँछ ।
आफ्नू प्रारब्ध भोगेर प्राणीले पार पाउँछ ।।

राजा रङ्क धनी नेता विद्वान् यद्वा ठुला बडा ।
कालले भेद गर्दैन छ ऊ नियममा कडा ।।

मिथ्या हुन् घर सम्पत्ति परिवार सुहृज्जन ।
आखिरी सब यी छुट्छन् अहं मम वृथा तन ।।

अल्पायु कमिलादेखि दीर्घायु अजका तक ।
कालले सब नै खान्छ विना डर विना धक ।।

आराको धारले जस्तै काल नित्य घुमीकन ।
हाम्रो आयु सधैँ काट्छ अहोरात्र प्रतिक्षण ॥

कालको भुमरी भित्र घुमे पनि अहर्निश ।
कालको चाल बुझ्दैन अन्धो जो पङ्गु मानिस ॥

काल हो दुरतिक्रम्य मान्दैनौँ यसको डर ।
ठूलो आश्चर्य योभन्दा अरू के हुन सक्छ र ?



# दुःख भोग्छ निरन्तर

यश्च मूढतमो लोके यश्च बुद्धेः परङ्गतः ।
तावुभौ सुखमेधेते क्लिश्यत्यन्तरितो जनः ।।
– भागवत ३।७।१७

यहाँ दुई थरी मान्छे नित्य आनन्द पाउँछन् ।
ती हुन् ज्ञानी र अज्ञानी बीचका दुःख पाउँछन् ।।

वेदान्त भक्ति जान्दैन विवेक ज्ञान शून्य छ ।
इहामुत्र कता के हो ? शौच आचार शून्य छ ।।

अज्ञानावृत भै बाँच्छ खान्छ प्यूँछ रमाउँछ ।
बाह्य संसरमा रम्दै सारा जुनी बिताउँछ ।।

विषयासक्त संसारी संसारै सत्य ठान्दछ ।
सत्ता शक्ति र सम्पत्ति यिनै सर्वस्व मान्दछ ।।

धनको मद पालेर मदमत्त भईकन ।
मदिरामद उन्मत्त मान्छे झैँ बाँच्छ जीवन ।।

अज्ञ बाँच्छ अँध्यारोमा पुण्य पाप बराबर ।
ज्ञानी हिँड्छ उज्यालोमा देख्छ ब्रह्म सबैतिर ।।

न पाप उसमा पुण्य अहं न छ न कामना ।
न ता नरकको त्रास न ता स्वर्लोक चाहना ।।

ज्ञानाग्निमा सबै कर्म पोली भएर कञ्चन ।
ज्ञानी ब्रह्म भई बाँच्छ आत्माराम बनीकन ।।

विषयानन्द त्यागेको ब्रह्मानन्द अझै पर ।
बीचको ब्रह्मजिज्ञासु दुःख भोग्छ निरन्तर ।।



# जडभरत झैँ बनौँ

अकोविदः कोविद वादवादान् वदिस्यथो नातिविदां वरिष्ठः ।
न सूरयो हि व्यवहारमेनं तत्त्वावमर्शेन सहामनन्ति ॥
– भागवत ५।११।१

अल्पज्ञ हौ तैपनि विज्ञ जस्तै, गर्छौ तिमी तर्कहरू प्रशस्तै ।
वेदान्तको तत्त्व जहाँ हुँदैन, तत्त्वज्ञ त्यस्मा रुचि नै लिँदैन ॥

हामी भरत बन्दैनौ अगाडि जड लीकन ।
हामी शास्त्रादि पढ्दैनौँ श्रद्धाले मन दीकन ॥

हामीमा भावना छैन दुर्भाव नित्य छर्दछौँ ।
रहूगणसरी हामी ज्यादा कुतर्क गर्दछौँ ॥

कुतर्कबाट सद्ज्ञान मिल्दैन बुझ्नुपर्दछ ।
कुतर्कबाट आफ्नू नै भित्री अज्ञान खुल्दछ ॥

वेदानुकूलको तर्क सुतर्क हो भनीकन ।
यसैले खुल्छ सद्ज्ञान भन्छन् शास्त्रज्ञ सज्जन ॥

अल्पज्ञ भै तैपनि विज्ञ बन्छु, कुतर्क गर्दै नहुँदा म भन्छु ।
वेदान्तको ज्ञान विना म विज्ञ, रहूगणैतुल्य हुँ मूढ अज्ञ ॥



# गङ्गासागरसङ्गम

हाम्रो धार्मिक यात्रा हो गङ्गासागर सङ्गम ।
गङ्गासागर हुन् तीर्थ स्नानार्थ अति उत्तम ।।

प्यून सागरको पानी सकिन्न नुनिलो अति ।
स्नान दर्शन गर्नाले सप्रिन्छ शुद्ध भै मति ।।

गङ्गाको जलले स्नान गर्दा र पिउँदा पनि ।
हाम्रा पापहरू भाग्छन् भन्छन् शास्त्रादिले पनि ।।

नुनीलो जलले पूर्ण अगाध जलसागर ।
पानी पानी छताछुल्ल पिउनै नहुने तर ।।

तर त्यै जल सोसेर छानेर सूर्यले जब ।
दिन्छन् अमृत पारेर पिउछन् सबले तब ।।

शास्त्र ज्ञान छ दुर्बोध्य ब्रह्मज्ञान असम्भव ।
कृपा चार मिलेदेखि हुन सक्तछ सम्भव ।।

आत्मा गुरु सँगै शास्त्र कृपा ईश्वरको पनि ।
भए खुल्दछ सद्ज्ञान त्यो जान्छ ब्रह्म नै बनी ।।

सारा शास्त्र पचाएर गुरु बर्साउँछन् जब ।
मुमुक्षु शिष्यका लागि बन्ला अमृत नै तब ॥

मुमुक्षु झुक्नु नै पर्छ गुरुसामु गईकन ।
झुक्नु पर्छ ‘अहम्’ हाम्रो स्वच्छ पात्र भईकन ॥

त्यसै कारण आत्मा र गुरुप्रसादले विना ।
शास्त्रज्ञान हुँदै हुन्न ईश्वरानुग्रहै विना ॥

हामीले त्याग्नु नै पर्छ कामना र ‘अहम् मम’ ।
अन्यथा पुग्न गाह्रो छ गङ्गासागरसङ्गम ॥



# बाहिरै कति घुम्ने हो

पराञ्चीखानि व्यतृणत्स्वयम्भू
तस्मात्पराङ् पश्यति नान्तरात्मन् ।
कश्चिद्धीरः प्रत्यगात्मानमैक्ष –
दावृत्तचक्षुरमृतत्वमिच्छन् ।।
– कठोपनिषद् २ । १ । १

ब्रह्माले जीवका आँखा फर्काए बाहिरै तिर ।
त्यसै कारणले मान्छे हेर्दैन भित्रका तिर ।।

कति आनन्द खोज्ने हो ? आनन्द छैन बाहिर ।
यदि आनन्द खोज्ने हो ? फर्किऊँ भित्रका तिर ।।

वृद्धावस्था भयो हाम्रो पढ्ने वेला गई सक्यो ।
भो भयो कति लेख्ने हो ? लेख्ने वेला गई सक्यो ।।

सिर्जना रचना रच्ने हाम्रो वेला गई सक्यो ।
अब ता चुप लागेर बस्ने वेला भई सक्यो ।।

उपर्युक्त सबै भाव हुन् अकर्मण्य पलायन ।
अवसाद तिरस्कार आत्मघाती कुचिन्तन ।।

नलेखौँ व्यर्थ साहित्य मिथ्या भावहरू भरी ।
नपच्ने ह्वास्स उच्छिष्ट न ठानौँ रसमाधुरी ।।

बाहिरै घुम्न चाहन्छौँ मिथ्यामा नै रमाउँछौँ ।
आफ्नू स्वरूप बिर्सन्छौँ भित्र हेर्न डराउँछौँ ।।

वृद्धावस्था त हो हाम्रो परिपक्व परिष्कृत ।
यसै उमेरमा हुन्छ आत्मज्ञान अकम्पित ।।

बहिर्दृष्टि सबै त्यागी आन्तर्दृष्टि गरीकन ।
आँखा चिम्ली पसौँ भित्र रोकेर चञ्चले पन ।।

रोकेर बुद्धिका वृत्ति बाँधी विक्षिप्त यो मन ।
ध्यानस्थ भई खोजेमा भित्रै मिल्छ महाधन ।।



# हामी कुन गुणमा पर्छौं ?

मान्छे तीन थरी हुन्छौँ गुणका भेदले गरी ।
सात्त्विकी राजसी तेस्रो तामसी गुणले गरी ।।

यी तीन थरीमा हामी पर्दछौँ कुनमा भनी ।
गरौँ चिन्तन सुध्रन्छौँ होऊँ जो जति दुर्गुणी ।।

श्रद्धापूर्वक जो गर्छौं यज्ञादि देवपूजन ।
फलको आस गर्दैनौँ गर्छौं नारायणार्पण ।।

गर्छौं सत्पात्रमा दान नित्यकर्मादि गर्दछौँ ।
खोज्दैनौँ मान सम्मान अरूको मान गर्दछौँ ।।

गर्छौं सात्त्विक आहार ताजा स्वच्छ निरामिष ।
गर्दछौँ वृद्धको सेवा पाउँछौँ शुभ आशिष ।।

भगवद्भक्तिका साथ गर्छौं वेदान्तचिन्तन ।
भने सात्त्विक हुन् मान्छे भन्छन् शास्त्रज्ञ सज्जन ।।

फलको कामना राखी जो गर्छौं देवपूजन ।
सत्ता शक्ति र सम्पत्ति खोज्छौँ अहं लिईकन ।।

आहार राजसी गर्छौं वश इन्द्रियका परी ।
मान सम्मान नै खोज्छौँ राजसी गुणले गरी ।।

शास्त्रीय विधि छोडेर भूतप्रेतादि पूजन ।
कुसङ्गत कदाचाचार गर्छौं आमिष भोजन ।।

दम्भाऽहङ्कार राखेर सबैलाई सताउँछौँ ।
भने हौँ तामसी हामी कसरी शान्ति पाउँछौँ ?

शान्त सद्भक्त सद्ज्ञानी शुद्ध सात्त्विक तत्पर ।
ज्ञानी मुक्त भई जान्छन् ब्रह्म हुन्छन् परात्पर ।।

अहं र कामनायुक्त रागी मानिस राजस ।
ती जन्ममृत्युमा पर्छन् घुमिरन्छन् अहर्निश ।।

दम्भी अल्छी दुराचारी अज्ञानी तामसी जन ।
सधैँ नरकमा पर्छन् भोग्छन् सन्तप्त जीवन ।।



# सक्छौ र फर्काउन

छोडी सबै इन्द्रिय पूर्ण छाडा,
जोडी कुसङ्गीसँग सङ्ग गाढा ।
दुष्कर्म दुष्कार्य गरी अपार,
तर्छौ कसोरी ? भवसिन्धु पार ॥

घुम्छौ सधैँ बाहिर चाख राखी,
हुन्छौ तिमी मस्त विषादि चाखी ।
बाँच्छौ सधैँ शङ्कित भै यसोरी ?
कलङ्कको पङ्क धुने कसोरी ?

कल्याणका कामहरू भुलेर,
हाम्रा गए यामहरू डुलेर ।
बेकार जाला बुझ यो जवानी,
पाइन्न फर्की नरजिन्दगानी ॥

हाम्रो गयो यौवन जो बिती गो,
फर्किन्न फेरि क्षण जो बिती गो ।
बग्यो गयो जो जलको तरङ्ग,
आउन्न फर्केर उही तरङ्ग ॥

आब्रह्म सानो भुसुनो हुँदा तक,
पाइन्छ यो भोग भने हदैतक ।
त्रिशुक्ल भै मानिस जन्म फेरि,
पाइन्न भन्छन् श्रुति शास्त्र हेरी ॥

अशान्त छौ जे पनि गर्न सक्छौ,
प्रशान्तको खाडल भर्न सक्छौ ।
समुद्रलाई पनि घेर्न सक्छौ,
आकाश मान्द्रोसरि बेर्न सक्छौ ॥

घुमेर चारैतिर बार बार,
तिमी गरौला ध्रुवलाइ पार ।
घुम्छौ सधैँ बाहिर नै विचित्र,
सक्तौन आफ्नै तर पस्न भित्र ॥

सक्छौ सबै काम तिमी गरौला,
गिनीजमा नाम सिधै दरौला ।
सबै गरौला तर यो जवानी,
सक्छौ र फर्काउन जिन्दगानी ?



# बत्ती प्रकाश छर्दछ

पढौँ ज्ञान र विज्ञान जानी संसारको क्रम ।
अरूका लागि नै बाँच्नु यथाशक्य गरी श्रम ।।

सधैँ बाहिर नै दौडी पाइन्न शान्ति वस्तुतः ।
आफैँ भित्र पसे मात्रै पाइन्छ शान्ति शाश्वत ।।

पढौँ आकर वेदादि षडङ्ग अर्थका सँग ।
आफैँ पढेर जानिन्न पढौँ गै गुरुका सँग ।।

पढेर शास्त्र सद्भक्ति सद्ज्ञान हुनुपर्दछ ।
पालेकी घरमा गाई दुहुनू हुनुपर्दछ ।।

आफ्नू सामर्थ्य जानेर शास्त्रादि पढ्नुपर्दछ ।
अगाध जलको माछो थोरै नै पान गर्दछ ।।

हाम्रो छ जिन्दगी छोटो बेलैमा बुझ्नु पर्दछ ।
श्रेयस्कामी बनी हामी ज्ञानमा जुध्नु पर्दछ ।।

अन्तःकरणको कालो कामना धुनुपर्दछ ।
महाप्रस्थानका लागि तयार हुनु पर्दछ ।।

अहं नै धन संझेमा धेरै विकृति बढ्दछन् ।
काम क्रोध र मात्सर्य असूया लोभ बढ्दछन् ॥

भएर पनि अल्पज्ञ सर्वज्ञभाव बढ्दछ ।
अहं नै सम्पदा सम्झे बुद्धिको नाश गर्दछ ॥

बुद्धिका शुद्धिका लागि सत्शास्त्र पढ्नुपर्दछ ।
भगवद्भक्तिका साथै सद्ज्ञान हुनुपर्दछ ॥

उपदेश र सद् उक्ति सुपाच्य हुनु पर्दछ ।
अन्तःकरणका भित्र चसक्क छुनु पर्दछ ॥

अज्ञानी भित्र जस्तो छ सोही बाहिर बोल्दछ ।
कुण्ठा अज्ञान र मात्सर्य पारी उदाङ्ग खोल्दछ ॥

ज्ञानी सारा पचाएर देशना नित्य गर्दछ ।
जसरी तम खाएर बत्ती प्रकाश छर्दछ ॥



# गरौँ होस निरन्तर

अदान्त र अहङ्कारी दुःशील जड छन् जति ।
गुणले हीन छन् जो जो गर्छन् नाटक ती अति ।।

यो प्रातिबिम्बिका सानो जड भैकन बोल्दछ ।
भित्री हृदयको भाव प्रस्ट पारेर खोल्दछ ।।

को कतातिर जाँदैछन् दिशाविहीन छन् कति ।
छन् आत्मरतिमा को को गहिरा सतही कति ।।

असूयायुक्त छन् जो जो गुणी देखेर जल्दछन् ।
ज्ञानी भक्तहरूमाथि दोषारोपण गर्दछन् ।।

मुहारपुस्तिका हो यो मुखको भाव जान्दछ ।
पारदर्शी छ यो पात्र सोचेको सब जान्दछ ।।

यो हो सञ्जयको आँखो अन्धाको चक्षु खोल्दछ ।
मनको भावना खोल्छ देखेको प्रस्ट बोल्दछ ।।

परीक्षाकेन्द्र झैँ यो हो देऊ जानेर उत्तर ।
अन्यथा हास्यको पात्र बन्ने छौ होस नै गर ।।



# चस्कन्छ चस्स मुटु यो

आयो वसन्त अब कोकिल बोल्नुपर्थ्यो,
माधुर्य सीधु सबमा अब घोल्नुपर्थ्यो ।
फक्रेर फूल सुषमा अब छर्नुपर्थ्यो,
आह्लादयुक्त धरती सब गर्नुपर्थ्यो ॥

बोल्दैन आज किन ! कोकिल धैर्य साथ,
आवास नै क्षय भई कि ! भयो उदास ।
दुःखी भई कि ! अब कोकिल दैन्य पाली,
यद्‌वा बस्यो कि ! रुखमा जडता अँगाली ॥

देखिन्छ यो प्रकृति दूषणपूर्ण सारा,
रोए सरी सकल देख्तछु बेसहारा ।
छेकेर घाम अब धूमिल धूम छायो,
मध्याह्न आज किन ? दुर्दिन झैँ गरायो ॥

फैलिन्छ यो विजनमा किन ? गन्ध ह्वास्स,
काँडा बिझे सरह घोच्तछ भित्र च्वास्स ।
भासिन्छ पाउ किन ? टेक्छु जता म भ्वास्स,
झस्किन्छ यो मुटु हरे ! किन ? आज झ्वास्स ॥

कुण्ठा छ भित्र मनमा जसको अनन्त,
फुल्ला कहाँ ? सुमन सुन्दर भै वसन्त ।
ऊ देख्छ बाह्य सुषमा मधुमास भित्र,
जस्को छ भित्र मनमा सुषमा पवित्र ॥

बढ्दो छ जर्जर दुराग्रह भेदबुद्धि,
दुर्भावयुक्त ममपूर्ण छ छैन शुद्धि ।
आफैँसँगै क्रमिक दूर भएर जान्छ,
दुर्बुद्धियुक्त हुन गै तर विज्ञ ठान्छ ॥

हामी सबै दमित दुर्धर दैन्य पाली,
हिँड्छौँ भिरेर भय निर्भय दूर फाली ।
बन्छौँ भ्रमी भ्रमीलई भ्रमबाट भ्रान्त,
हाम्रो छ भित्र मन चञ्चल भै अशान्त ॥

कुण्ठा दुराग्रह दुराशय पाल्न थाल्यौँ,
हाम्रा सुसभ्य समता सब फाल्न थाल्यौँ ।
हामी बहिर्मुख भई सब डुल्न थाल्यौँ,
हाम्रो सुसभ्य शुभ संस्कृति भुल्न थाल्यौँ ॥



# छुट्छ संसारबन्धन

हामीसँग छ जो वस्तु भित्र नित्य र शाश्वत ।
बिर्सेर भित्रको वस्तु खोज्छौँ बाह्य अश्वाश्वत ॥

बाहिरी नेत्र खोलेर हेर्छौं दृश्य जडात्मक ।
हेर्दैनौँ भित्रको द्रष्टा आफ्नै रूप चिदात्मक ॥

चोरी ढाँटी छली मागी कृत्याकृत्य गरी सब ।
आफ्नै पतनका लागि जोड्छौँ मायिक वैभव ॥

भित्री सम्पत्ति बिर्सन्छौँ जो छ प्राप्त निरन्तर ।
विना प्रयास सम्प्राप्त आफ्नै स्वरूप सुन्दर ॥

जो विना आफु नै हुन्नौँ जोद्वारा आफु बन्दछौँ ।
जस्को कारणले हामी अहं र मम भन्दछौँ ॥

प्रतिबिम्ब उसैका हौँ जो भित्र बिम्बरूप हो ।
साक्षी प्रत्यक्ष चित् आत्मा स्वप्रकाश अरूप हो ॥

आमोक्ष ऊ सँगै हुन्छ ऊ कृत्याकृत्य हेर्दछ ।
चित्रगुप्त बनी साक्षी सबै टिपोट गर्दछ ॥

अधर्म न गरे भन्दै भन्छ धर्म सधैँ गर ।
हाम्रो यो बुद्धि उल्टो छ अधर्मै गर्दछौँ तर ॥

जो विना जीव नै हुन्नौँ आब्रह्म जीव हौँ सब ।
जो विना सब नै हुन्छौँ जड पत्थर वा शव ॥

सधैँ सुलभ आफैँमा सच्चिदानन्द जो धन ।
तर बाहिरको खोज्छौँ मिथ्या संसारको धन ॥

सुगन्ध भित्र राखेर कस्तूरी खोज्छ बाहिर ।
ठूलो आश्चर्य यो भन्दा अरू के हुन सक्छ र ?

भित्रका नेत्र खोलेर हेरौँ स्वरूप चिन्मय ।
बाहिरी धनको खोजी छोडौँ दुःखद मृन्मय ॥

भित्रको धन हो मोक्ष बाहिरी धन बन्धन ।
भित्रको धन पाएर बनौँ निर्मुक्तबन्धन ॥



# स्वरूप ज्ञान

न हि ज्ञानेन सदृशं पवित्रमिह विद्यते ।
तत्स्वयं योगसंसिद्धः कालेनात्मनि विन्दति ॥
– श्रीमद्भगवद्गीता ४ । ३८

ज्ञानजस्तो अरू वस्तु छैन पवित्र लोकमा ।
ज्ञानसंस्कृत सद्धीले प्राप्त बन्दछ जो स्वमा ॥

पवित्र ज्ञान हो ठूलो यो हो शाश्वत निश्चित ।
ज्ञानका भेद छन् धेरै बुझ्नुपर्छ सुनिश्चित ॥

वृत्त्यात्मक स्वरूपात्म ज्ञानका दुइ भेद छन् ।
स्वरूपात्मक यौटै हो वृत्त्यात्मक असङ्ख्य छन् ॥

पहिलो ज्ञानले मान्छे पवित्र अति बन्दछ ।
त्यसले मुक्तिको मार्ग प्रशस्त गर्न सक्तछ ॥

वृत्तिभन्दा निकै श्रेष्ठ पहिलो ज्ञान पर्दछ ।
अन्तःकरणका दोष तीनोटै नाश गर्दछ ॥

व्यवसायात्मिका बुद्धि ज्ञानको मुख्य कारण ।
दुश्चक्रको महा जालो यल्ले गर्छ निवारण ॥

अव्यवसायीका बुद्धि संसारतिर झार्दछ ।
यो हो संसृतिको हेतु दुश्चक्र भित्र पार्दछ ॥

गुरु ब्रह्मज्ञ ज्ञानीले सद्ज्ञान दान गर्दछन् ।
अज्ञानी गुरुले खालि संसारी भ्रम छर्दछन् ॥

ज्ञबाट प्राप्त सद्ज्ञान पवित्र ज्ञेय बन्दछ ।
अज्ञबाट भए प्राप्त त्यही नै हेय बन्दछ ॥

एउटै नलको पानी भान्साको पेय बन्दछ ।
त्यै शौचालयमा पुग्दा अपेय हेय बन्दछ ॥



# अहं ब्रह्माऽस्मि

केही म जान्दिन म अज्ञ हुँ अल्पबुद्धि,
पाली अहं र मम म हिँड्दछु ली कुबुद्धि ।
कुण्ठा छ भित्र मनमा अति उग्र कालो,
बाँच्तो छु आत्मरतिमा लिई क्षुद्र जालो ।।

सम्पत्ति शक्ति पदबाट भई म मत्त,
घुम्दो छु निर्भ्रम सबैतिर भै प्रमत्त ।
क्वै छैन मैँ सरह सर्वसमर्थ जान्ने,
सम्झन्छु हुन् नर अरू जड यी नजान्ने ।।

आफ्नै अहं र ममबाट म घेरिँदो छु,
सम्बन्ध मोह लहरासँग बेरिँदो छु ।
झन् कस्सिँदो छ दृढ दुर्जय मोहपाश,
निस्तार देख्तिन कतै छु सधैँ हताश ।।

बिस्तार सूर्य अब पश्चिमतर्फ लर्के,
सन्ध्या सँगै तिमिर सम्भ्रम फेरि फर्के ।
आफ्ना समस्त कर सुस्त सबै समेटी,
या ध्यानमा रवि बसे रजनी लखेटी ।।

त्यस्तै म आज सब ऐहिक कर्म रोकी,
खोज्दैछु भित्रतिर पस्न सुकर्म बोकी ।
चाहन्छु नास्न सब सञ्चित कर्मधारा,
एक्लो हुने छ मन ली समको सहारा ॥

देखिन्छ बाहिर तमोमय कृष्णरूप,
देखिन्छ भित्रतिर झल्मल सत्स्वरूप ।
आफ्नू स्वरूप जुन हो सब बिर्सिएर,
मेरो गयो नर जुनी तममैँ फसेर ॥

नृजन्म हो सकलमा अति नै विशेष,
यैबाट पाउन सकिन्छ परात्परेश ।
जानेर तत्त्व सम आन्तर चक्षु खोली,
ब्रह्मास्मि भै बसिरहूँ चुप भै नबोली ॥



# नियानो अभिवादन

सच्चिदानन्द आत्मा हो ब्रह्म साक्षी परात्पर ।
आदि अन्त्य दुवै शून्य सर्वात्मा जगदीश्वर ।।

मिथ्या जड निरानन्द देह हो क्षणभङ्गुर ।
मायाविकारको पुञ्ज षड्भावयुक्त नश्वर ।।

चिदचिद्ग्रन्थि हो जीव देहका भित्र बस्तछ ।
'अहं' संज्ञा लिई जीव सुखदुःखादि भोग्दछ ।।

अरू बार गते संवत् जन्मेका दिन होइनन् ।
अनौपचार हुन् सारा उपचार ती होइनन् ।।

झुल्केका भर्खरै घाम डाँडा माथि भई सके ।
लामो छाया खसालेर डुब्ने तर्फ गई सके ।।

आयो गयो गयो आयो यो हो दुरन्त संसृति ।
कैल्यै अन्त्य हुँदै हुन्न यो स्वयंसृष्ट दुष्कृति ।।

सत् चित् आनन्द आत्मा हो जन्ममृत्यु विवर्जित ।
मिथ्या हो देह देखिन्छ हराउँछ क्रमै सित ।।

मेरो यो देह आएको तिथि पक्ष दिईकन ।
सबैलाई म अर्पन्छु साष्टाङ्ग अभिवादन ।।



# वृद्धावस्था

जैलेसम्म युवा थियो अकडियो अत्यन्त जान्ने भयो,
साँढेझैँ अति डुक्रियो तुजुक ली आफैँ मपाईं भयो ।
लुट्यो जे जति पाँउथ्यो धन जहाँ जिम्मा लिएको थियो,
लुट्थ्यो जो धन भाग लाई उसले आफन्तलाई दियो ॥

बाँड्यो खायो अति खुस भई मस्त काट्यो जवानी,
आत्मा मारी अघि जति गर्‍यो पाप ठान्दै नठानी ।
खाए लागे पर पर भए छैन कोही सहारा,
बूढो रोगी अब छ पथरा पाप बोकेर सारा ॥

छातीमा कफ बज्छ घर्घर गरी फोक्सो सबै शीर्ण छ,
मिर्गौला मधुमेहले क्षति गरी त्यस्तै महाजीर्ण छ ।
सारै उच्च भएर रक्त मुटुको बाजा बजाई सक्यो,
भोग्ला त्यो कति सम्पदा अब यहाँ सन्देश आई सक्यो ॥

सारै छाडा अघि हुन गई बिर्सिई लाज शर्म,
जे जे पायो अति सब गर्‍यो पाप दुष्कार्य कर्म ।
बूढो ऐले विगत दिनका सम्झनाले सताई,
एक्लै झोक्री गुमसुम भई बस्छ आफैँ हराई ॥

उल्ले जीवनमा गऱ्यो जति कुरा जे जे नराम्रा सब,
झल्किन्छन् स्मृतिपत्रमा झलझली आएर उस्का अब ।
आँखामा चलचित्रका रिलसरी आएर जान्छन् पर,
निद्रा छैन न भोक लाग्छ बिचरो ऊ मान्छ सारै डर ।।

बिर्स्यो त्यल्ले अघि जति पनि पढ्यो वेदशास्त्रादि सारा,
उल्टै जोड्यो धन विभव नै पापको ली सहारा ।
जे जे ल्यायो तनयतनया वंशले बाँडि खाए,
आई पर्दा विपद अहिले दूर भागे हराए ।।

लट्ठीका भरबाट हिँड्छ अहिले कम्जोर सारै भयो,
राखी भित्र अहं तथा मम अझै सन्केर बाँच्ने भयो ।
देख्ता बाहिर मानवैसरि छ ऊ भित्री छ अर्कै कुरो,
हेर्दा लाग्दछ बाहिरी मृदु सरी काठिन्य भित्री चुरो

आफ्नै मान्छे अब त किन हो हेय वा त्याज्य ठान्छन्,
फर्की फर्की विगत दिनले बेसरी लात हान्छन् ।
बुझ्दै ल्यायो चरम वयमा बुझ्नुपर्थ्यो अगाडि,
आफैँदेखिन् विरत छु सधैँ फर्किहेर्दा पछाडि ।।

हेँला गर्छ समाजले घरले पर्नेछ एक्लो हुनु,
पश्चात्ताप भएर पर्छ उसले एकान्तमा गै रुनु ।
गम्यागम्य समान भो विगतमा त्यो दाग केले धुनु,
आफ्नै अन्तरले सराप्छ बहुधा उन्मुक्त कैले हुनु ।।

आँखामा अझ नाच्छ दृश्य अधिकै ठान्दैन बूढो भएँ,
तृष्णामात्र जवान नित्य उसको ठान्दै म बूढो भएँ ।
सम्झी बस्तछ झोक्रिई विगत नै फर्केर आउन्न जो,
उल्ले बाँच्न सिकेन आफ्नु युगमा आफ्नू छ सामुन्ने जो ॥

प्रारब्धले जुन दियो नबुझेर खास,
देखिन्छ दिक्क अति बस्छ भई उदास ।
सद्ज्ञान भक्ति नहुँदा छ विवेकहीन,
ऊ बस्छ आज अवसादित दीनहीन ॥



# गर्नुपर्ने कुरा

"आदौ स्ववर्णाश्रमवर्णिताः क्रिया,
कृत्वा समासादितशुद्धमानसः ।
समाप्य तत् पूर्वमुपात्तसाधनः,
समाश्रयेत् सद्गुरुमात्मलब्धये ।।"
– रामगीता ७

गर्नुपर्ने कुरो के हो ? पन्थीको प्रश्न जो थियो ।
त्यस्कै उत्तरमा मेरो बढ्यो कलम फेरि यो ।।

व्रतबन्ध गरी वेद षडङ्ग अर्थका सित ।
गुरुसाथ गई पढ्नु विधिपूर्वकका सित ।।

भई स्नातक फर्केर घरमा विधिकासँग ।
विवाह गर्नु आफ्ना नै वर्णकी युवतीसँग ।।

गार्हस्थ्य धर्मले युक्त भएर गृही नै भई ।
नित्य नैमित्तिकी कर्म गर्नु निष्कामना लिई ।।

माता पिता दुवैलाई देवतातुल्य सम्झनु ।
पाहुना गुरु सम्मान गर्ने बानी सधैँ लिनु ।।

पुत्रोत्पादनका साथै शिक्षादीक्षा दिईकन ।
सुम्पेर घरको काम बस्नू निवृत्त भैकन ॥

अनासक्त बनी गर्नू भक्ति वेदान्तचिन्तन ।
घरले पनि बाँध्दैन बस्नू तटस्थ भैकन ॥

पढ्नू वेदान्त शास्त्रादि प्रमाद नलिईकन ।
ब्रह्माभ्यास सधैँ गर्नू निदिध्यासन चिन्तन ॥

मनुष्य योनि दुष्प्राप्य फेरि पाउन दुस्तर ।
गर्नु सार्थक यो योनि भई ब्रह्म परात्पर ॥



# सब स्वार्थजन्य

अध्यासजन्य नरजीवन घामछाया,
आविद्यिकी अभिनिवेशित मोहमाया ।
मिथ्या प्रपञ्च जड दृश्य असत्य पाली,
घुम्छौँ अनन्ततक देह लिएर खाली ॥

क्वै छैन आफ्नु सब स्वार्थ लिएर घुम्छौँ,
भो स्वार्थ पूर्ण अनि मस्त भएर झुम्छौँ ।
यद्वा भएन मनमाफिक सो प्रपूर्ण,
सम्बन्ध हुन्छ सब काच समान चूर्ण ॥

यो मञ्च हो र यसमा जति छौँ कुपात्र,
खेल्छौँ स्वकर्म अनुरूप लिएर गात्र ।
बोल्दौँन मानिस कुनै पनि भित्रबाट,
बोल्छौँ बनावट र कृत्रिम ओठबाट ॥

पत्नी हउन् कि ! पति हुन् सब आफ्नु लागि,
राख्छौँ सदैव ममता तब बाँच्न लागि ।
भन्ने छ उक्ति बुधको सब ठान्छु सत्य,
हो वेदको वचन हुन्छ कहाँ असत्य ?

“न वा अरे सर्वस्य कामाय सर्वं प्रियं भवत्यात्मनस्तु कामाय सर्वं प्रियं भवति । न वा अरे द्रष्टव्यः श्रोतव्यो मन्तव्यो निदिध्यासितव्यो मैत्रेय्यात्मनो वा अरे दर्शनेन श्रवणेन मत्या विज्ञानेनेदं सर्वं विदितम् ।” – बृहदारण्यकोपनिषद् २।४।५



# असत् साधन सत् साध्य

असत् साधन हो दृश्य सत्को ज्ञान गराउने ।
असत् साधन हो मुख्य आत्मज्ञान गराउने ।।

दृश्य साधन हो मिथ्या सत् चित् आत्मा चिनाउने ।
हामी छौँ आफुमै टाढा आफूसम्म पुऱ्याउने ।।

मिथ्या साधन हुन् सारा आत्मा सत् चित् परात्पर ।
मिथ्या साधनद्वारा नै आत्मज्ञान हुने तर ।।

बुद्धिमान् अनि मेधावी त्यही मनुष्य बन्दछ ।
असत् साधनले नै जो ब्रह्मानुभूति गर्दछ ।।

आफ्नै स्वरूप हो आत्मा खोज्दै बाहिर हिँड्दछौँ ।
बाहिरै हेर्ने आँखाले कसरी भित्र देख्तछौँ ।।

सत् चित् आनन्द आत्मा हो यौटै सत्य परात्पर ।
दृश्य देहादि संसार असत् अलीक हुन् तर ।।

असत् साधन हुन् सारा सत् आत्मा नित्य हो सदा ।
असत् साधनद्वारा नै हुन्छ सत् प्राप्य सर्वदा ।।



# भित्रै छ आफ्नू घर

यो संसार असत्य हो क्षणिक हो जो लाग्छ सत्यै सरि,
सत्ता लीकन सत्यको स्वसरहै चम्कन्छ चंचम् गरी ।
अज्ञानीकन भास्छ सत्य सरहै संसारको चंचम,
ज्ञानीले तर ठान्छ शुक्ति रजतै तत् तुल्य सारा भ्रम ॥

भोग्यो नाश भएर जान्छ र यहाँ टिक्तैन धेरै क्षण,
त्यस्तै नै सुख भोग स्वर्गीय पनि नासिन्छ भोगीकन ।
छैनन् शाश्वत नाशवान् सकल छन् मायिक मिथ्या सब,
आफ्नो नै छ शरीर नश्वर भने भन्नु अरू के अब ॥

हेर्दा बाहिर दृश्य मायिक सबै ठानिन्छ चिद्रूपक,
हेरौँ तात्त्विकरूपले यदि भने देखिन्छ विद्रूपक ।
यो संसार अनित्य लाग्छ तब नै अज्ञान हट्ला जब,
यो सारा जड दृश्य मिल्छ उसमै झल्किन्छ सच्चित् तब ॥

भित्री नेत्र गरेर बन्द अहिले कुद्छौँ सधैँ बाहिर,
हेर्ने फुर्सद छैन भित्र कहिल्यै फर्केर आफैँतिर ।
कुद्दैमा सकिइन्छ जीवन वृथा तृष्णा लिई दुस्तर,
फर्कौं भित्र र आफुमै रत बनौँ भित्रै छ आफ्नू घर ॥



# अँध्यारो भ्रम

आफ्नै दुर्लभ स्वेदबिन्दु सिञ्चित गरी यो हो बनेको घर,
यो हो शाश्वत वाटिका सुमनको सत्कार्यको मन्दिर ।
यो हो सात्विक शान्त सुन्दर सफा वाणी पराको घर,
हेर्दा बाहिर लाग्छ भौतिक वृथा जाज्वल्य भित्री तर ।।

यस्का अर्चक साथ रक्षक दुवै छन् वृद्ध जोडी द्वय,
जल्ले सिर्जनमा गरे वय सँगै सम्पत्ति सारा व्यय ।
बस्छन् द्वार कुरेर आज दुइटै छन् जीर्ण रोगी अति,
राखी सुन्दर मूर्ति हृत्कमलमा ध्यानस्थ भै सम्प्रति ।।

लिन्नन् दान र दक्षिणा पनि कुनै बाँड्छन् शुभेच्छा तर,
दिन्छन् आशिष बालवृद्ध वनितालाई भई तत्पर ।
बाँड्छन् ज्ञान र भक्ति अज्ञजनमा पर्साद सम्झीकन,
जल्ले लिन्छ र राख्छ भित्र मनमा बन्ला उही पावन ।।

यो हो मन्दिर पाञ्चभौतिक जहाँ बस्छन् गरी चिन्तन,
साक्षी भैकन हेर्दछन् हरघडी आँखै नचिम्लीकन ।
बस्छन् ती प्रति जीवका हृदयमा ठानेर आफ्नै घर,
फ्याँक्छन् अज्ञ अमेद्य सो सदनमा गर्छन् उपद्रो तर ।।

साक्षी हुन् अनि चित्रगुप्त पनि हुन् लेख्छन् सबैको बही,
जन्मेदेखि समस्त कर्म जनको जस्तो छ लेख्छन् सही ।
मर्दामा पनि जीवका सँगसँगै जान्छन् नछोडीकन,
बाँच्तामा पनि पार्दछन् सजग ती औँलो ठड्याइकन ॥

पाई सुन्दर देह यो मनुजको अर्थै न सम्झीकन,
फ्याँक्तै छौँ सब तुच्छ कार्यहरुमा पारी स्वहा जीवन ।
घुम्दैछन् दिनरात फन्फन सधैँ काटेर आयुक्रम,
थाहा छैन छ मस्त अज्ञ बबुरो पाली अँध्यारो भ्रम ॥



# प्रश्नै प्रश्न

के गर्छौ ? धनमात्रले हृदयको सन्तोष भाग्यो भने,
के गर्छौ ? सब शास्त्र कण्ठत गरी कार्पण्य जाग्यो भने ।
के गर्छौ ? पकवान भै घरभरी भोकै हरायो भने,
के गर्छौ ? घरभित्र सिंह सरि भै लड्दा डरायो भने ॥

के गर्छौ ? व्रत धर्म दान तपले मात्सर्य जाग्यो भने,
के गर्छौ ? यम साथका नियमले औद्धत्य जाग्यो भने ।
के गर्छौ ? जप मन्त्रतन्त्र विधिले मैँ भित्र जाग्यो भने,
के गर्छौ ? पुरुषार्थ भित्र मनमा सन्त्रास जाग्यो भने ॥

के भेट्छौ ? मन बाहिरै तिर कुदी यो दृश्यमा नै रमी,
के भेट्छौ ? मम मात्रको स्मय लिई संसारमा नै जमी ।
के लान्छौ ? पछि साथमा धन तिमी छुट्छन् सबै नै यहीँ,
तिम्रा साथ हुँदैन साधन कुनै जान्छौ तिमी जाँ कहीँ ॥

ऐले यौवन शक्ति साधन छँदा मातेर अन्धो भई,
हिँड्छौ मत्त भएर अन्त्य न बुझी काटेर सीमा गई ।
सारा दृश्य पदार्थ हुन् क्षणिक यी आफ्नो शरीरै पनि,
यो जानीकन सुध्र हे अब तिमी अत्यन्त सीधा बनी ॥

के हेर्छौ ? अझ ट्वाल्ल भैकन तिमी लाटो सरी भैकन,
के सुत्छौ ? अझ कुम्भकर्ण सरि भै खुट्टा पसारीकन ।
हे मान्छे उठ ! जाग हत्पत तिमी खोलेर आँखा अब,
गर्छौ अल्मल ढल्किँदै रवि गए पारी अँध्यारो सब ॥



# कस्तो थियो के भयो

मेरो यो घर भत्कँदै अब गयो बन्दै गयो जर्जर,
मेरो आफ्नु शरीर नै सरह भो बन्दै गयो अस्थिर ।
सारै दुःख गरेर सिर्जन भयो पोखेर सारा श्रम,
मेरो यो घर हो तथापि अहिले बन्दैछ वृद्धाश्रम ॥

यो हो सञ्चित कर्मजन्यफलको संसार मेरो घर,
यो साझा घर पञ्चभूत सबको वा अस्थिको पञ्जर ।
यस्को सर्जक जो अदृश्य छ सधैँ जान्दैन कैल्यै भ्रम,
उस्कै कारणबाट सिर्जित भयो मेरो गृहस्थाश्रम ॥

पैले शैशव कालमा रहरिलो लावण्य यस्को थियो,
जल्ले मानव चित्त आफुतिर नै तान्ने जवानी थियो ।
बिस्तारै छ विकारका नियमले गल्दै र ढल्दै गयो,
ऐले वृद्ध कुरूप जर्जर भयो कस्तो थियो के भयो ।



# बाँचौ भई मानिस

आयुष् हो सय वर्षको मनुजको आधा सुतेरै गयो,
बाँकी वर्ष पचास बालक छँदा खेलेर सोह्रै गयो ।
बाँकी वर्ष बिहा गृहस्थ हुन गै सन्तान पाल्दै गयो,
बाँकी अन्तिम काल जर्जर भई ओछ्यानमा नै गयो ॥

हाम्रो जन्म छ देवदुर्लभ भनी शास्त्रादि भन्छन् सब,
हामीले यसको महत्त्व नबुझी बेकार फाल्यौँ सब ।
टिक् टिक् टिक् घडी घुम्छ रातदिन नै पारेर आयुक्षय,
हामीमा भय छैन कत्ति किन हो ? बाच्छौँ बनी निर्भय ॥

गर्दैनौँ जप भक्ति दान तप या ज्ञानादि केही पनि,
साथै छैन परोपकार र दया सद्भाव मैत्री पनि ।
हामी केवल काट्तछौँ दिनहरू खाएर मात्रै जब,
हामी या पशुमा छ भेद कसरी होला र ! ठूलो तब ॥

तस्मात् ज्ञान र भक्तिमा मन दिऊँ मान्छे सरी भैकन,
पैले जे हुन गो भयो भइगयो ब्यूझौँ उठौँ तत्क्षण ।
हामी सात्त्विक भावनासँग जिऔँ त्यागेर तामस् पन,
हाम्रो सार्थक शुद्ध निर्मल बनोस् बाँकी छ जो जीवन ॥



# सद्‌ज्ञान

के भाको किन हो मलाई अहिले वैराग्य नै फुर्दछ,
खाने गर्दछु भाग्यले जति दियो जस्तो जहाँ जुर्दछ ।
पैले भक्ति गरेर नै अघि बढेँ सद्‌ज्ञानका खातिर,
सोही कारण आज मस्त छु सधैँ लागेर सोही तिर ।

केही जान्दिन जान्न ता कठिन हो वेदान्त राम्रोसँग,
त्यस्का निम्ति म पढ्न नै अघि गएँ आचार्य विद्वान्‌सँग ।
भक्तिसाधन हो अहैतुकी ठूलो सद्‌ज्ञानको मार्ग हो,
सोही तर्फ बढेर साधन पुगे सम्प्राप्य सद्‌ब्रह्म हो ।

जैले भक्ति हुने छ सुस्थिर जसै विक्षेप भागीकन,
होला मायिक चित्त सुस्थिर तसै गर्ला सधैँ चिन्तन ।
संसारै तिर लस्सिने मन गई लाग्ने छ सद्‌ज्ञानमा,
होला भङ्ग गएर आवरण जो बाधा थियो ज्ञानमा ॥

निष्कामी भई गर्छ कर्म जसले आशा नली क्यै पनि,
गर्ला कर्म सबै समर्पण जसै नारायणायै भनी ।
फ्याँकिन्छन् मल दोष भित्र मनका बन्ने छ हृत् कञ्चन,
तत्पश्चात् मन बन्छ चञ्चल खुबै चङ्गा सरी भैकन ॥



# बस्छु सदा शान्त भै

ऐले वर्ष भयो असी तर सधैँ पढ्दै र लेख्तै छु म,
मेरा इन्द्रिय छन् अझै सबल नै सामान्य देख्तै छु म ।
लेख्ने गर्दछु नित्य काव्य कविता वेदान्त लेखादिक,
गर्ने गर्दछु पाठ वेद सँगमा गीता पुराणादिक ॥

घुम्ने गर्दछु शान्त ठाउँ छ जहाँ एकान्त कान्तारमा,
मेरो भोजन हुन्छ सात्त्विक सफा शाकादिक साथमा ।
चाँडै सुत्तछु उठ्छु चार नबजी निद्रा गहीरो लिई,
सिध्याई सब नित्य कर्म र पूजा निस्कन्छु ताजा भई ॥

गर्छु योग र गर्छु चिन्तन सधैँ ब्रह्मात्मवैदान्तिक,
ब्रह्माभ्यास र ग्रन्थ लेखन पनि चल्दैछ जो दैनिक ।
मेरो भोजन हुन्छ जो नियमितै पूर्वाह्नमा नै सदा,
गर्ने गर्दछु पालना नियमको योगादिको सर्वदा ॥

जानेसम्म म खान्न बाहिर कतै बोलिन्न झूटा कुरा,
दोधारे द्विविधा लिएर कहिल्यै गर्दिन बाङ्गा कुरा ।
जे जे बोल्दछु लेख्छु गर्दछु पनि भै स्पष्ट नै गर्दछु ।
लाल्चा आस र लोभ कत्ति नलिई सत्कार्य नै गर्दछु ॥

यद्वा आग्रह ली मलाई जसले मान्लान् कुनै अन्यथा,
त्यो होला कसरी र मान्य सहसा लेलान् उनै सर्वथा ।
यद्वा सज्जन जान्न चिन्न नसकी अत्यन्त नै अज्ञ भै,
भन्छन् वा यदि नै भने पनि भनुन् बस्छु म ता शान्त भै ॥



# आडम्बरी मानिस

हुँदा युवक मान्छेले प्रायः प्रमाद गर्दछ।
मर्यादा सब तोडेर न गर्ने काम गर्दछ॥

जिह्वा उपस्थको दास बनेर मत्त भैकन।
साँढे जस्तै भई हिँड्छ त्यागेर अनुशासन॥

विधिको काम गर्दैन निषिद्ध काम गर्दछ।
जहाँ बस्छ सबैतर्फ अति दूषण गर्दछ॥

सत्ता र सम्पदा निम्ति कुकृत्य सब गर्दछ।
आँखा छलेर ऊ बँच्छ यद्वा ऊ भित्र सड्दछ॥

त्यस्तो कुत्सित मान्छे त्यो बस्छ रुग्ण बूढो भई।
पश्चात्ताप सधैँ गर्छ आफ्नू अतीत सम्झिई॥

अपराध लुकाएर सधैँ नाटक गर्दछ।
सम्पत्ति भित्र राखेर त्यागी बाहिर बन्दछ॥

आफ्नू कुकृत्य सम्झेर ऊ अत्यन्त डराउँछ।
गङ्गामा गई चोबिन्छ चारधाम ऊ धाउँछ॥

भक्ति  वेदान्तमा लाग्छ विद्वान् समक्ष धाउँछ।
सुन्दैन अनि बुझ्दैन बुझेको धाक लाउँछ ॥

पापले भत्भती पोल्छ मृत्युदेखि डराउँछ।
पश्चात्ताप भई रुन्छ आँसु झारी कराउँछ ॥

विरक्त भैसकेँ भन्छ त्यागको रट लाउँछ।
धनसम्पत्तिको साँचो आफैँसँग लुकाउँछ ॥

त्यस्ताले पापले पोली त्रास मान्छ अहर्निश।
शास्त्रले त्याज्य हो भन्छ त्यस्तो कुत्सित मानिस ॥



# आफ्नै लागि

यदा सर्वे प्रमुच्यन्ते कामा यस्य हृदिश्रिताः ।
अर्थ मर्त्योऽमृतो भवत्यत्र ब्रह्म समश्नुते ॥
– कठोपनिषद् २।३।१४

असंस्कारी भए मेरा सन्तान भन्नु हो वृथा ।
आफ्नै प्रारब्ध नै भोग्न आउछन् जीव सर्वथा ॥

आफ्नै प्रारब्ध हो मुख्य उपादानाख्य कारण ।
आमा बाबु भने हुन्छन् निमित्तमात्र कारण ॥

म आफ्ना लागि नै लेख्छु अरूका लागि लेख्तिन ।
देशना उपदेशादि गर्नुपर्ने म देख्तिन ॥

सबै हुन् गुरु आचार्य मेरा निमित्त वस्तुतः ।
आफैँलाई म चाहन्छु जान्न यथार्थ तत्त्वतः ॥

अल्पबुद्धि म अल्पज्ञ अज्ञानी म हुँ जान्दछु ।
म प्रतिबिम्बिकालाई सद्ज्ञानी गुरु मान्दछु ॥

दुरन्त शास्त्र के जानौँ ? छन् मेरा लागि दुस्तर ।
साक्षी सर्वज्ञ सर्वात्मा मात्र हुन् एक ईश्वर ॥

तँ तिमी म सँगै हामी मेरा नै सर्वनाम हुन् ।
यिनको बुझ्नु तात्पर्य मलाई नै बुझाउछन् ॥



# बाँचेर पनि हो शव

जसको कर्मले धर्म, वैराग्य हुन्न उद्भव ।
न हुन्छ भगवद्भक्ति त्यो बाँचे पनि हो शव ।।

जीवात्मारूपले भित्र काल भैकन बाहिर ।
ओतप्रोत भई बस्छन् भगवान् सब नै तिर ।।

धन वैराग्य यौटै नै मान्छेमा हुन्न सम्भव ।
धनान्ध नरले मुक्ति प्राप्त गर्न असम्भव ।।

कालो बादलले गर्मी थोरै समय रोक्तछ ।
त्यस्तै नै धनले शान्ति क्षणार्ध दिन सक्तछ ।।

गहिरो नीदमा मान्छे क्षणार्ध शान्ति पाउँछ ।
जाग्रत्मा जब फर्कन्छ फेरि दुःख सताउँछ ।।

अहं र मम पालेर जो मान्छे मस्त बन्दछ ।
अज्ञानावृत भै त्यस्को विवेक अस्त बन्दछ ।।

न भक्ति त्यसले गर्छ न वैराग्य उदाउँछ ।
न दान धर्म नै गर्छ पशुयोनि बिताउँछ ।।

त्यसले अन्यले जस्तै जानुपर्छ मरीकन ।
फर्की आउँछ ऊ फेरि क्षुद्र प्राणी भईकन ।।

कैले संसृति रोकिन्न आत्मज्ञान न भैकन ।
आकल्प घुम्नु नै पर्छ छुट्तैन भवबन्धन ।।



# आफ्नो नै मन हो ऐना

ऐनामा जसरी मान्छे आफ्नो जो मुख हेर्दछ ।
जस्तो छ मुख त्यस्तै नै ऐनामा प्रस्ट देख्तछ ॥

श्रद्धाका साथ अरूको जल्ले सम्मान गर्दछ ।
त्यसको बदला उल्ले त्यस्तै सम्मान पाउँछ ॥

बिम्ब ईश्वर हुन् साक्षी जीवात्मा प्रतिबिम्ब हो ।
बुद्धि शुद्ध भएदेखि झल्किने साक्षी बिम्ब हो ॥

न हल्लिने सफा ऐना जस्को हो मुख बिम्ब जो ।
प्रत्यावृत्त गरी ऐना देखाइ दिन्छ हेर्छ जो ॥

पारोमा ठोकिई बिम्ब प्रतिबिम्ब भईकन ।
फर्किंदा देख्छ हेर्नेले ऐनामा निज आनन ॥

पारो विनाको ऐनामा देखिन्न छवि सर्वथा ।
त्यस्तै भक्ति विना ज्ञान हुन सक्तैन सर्वथा ।

शुद्ध बुद्धि भएदेखि ब्रह्मको हुन्छ दर्शन ।
शास्त्रले सर्वदा गर्छ सोही भाव प्रदर्शन ॥



# हामी स्वस्थ बनी जिऔँ

बूढा जवान जो जो छौँ सबै बहिर्मुखी भयौँ ।
उत्ताल छालमा बग्दै हामी कता कता गयौँ ।।

लाग्यो समयले तान्दै रमायौँ बाहिरैतिर ।
लाग्यो टाढा बगाएर भयौँ विक्षिप्त अस्थिर ।।

बिर्सियौँ आफ्नू दायित्व कर्तव्य धर्म बिर्सियौँ ।
म को हुँ अब बिस्तारै कठै त्यो पनि बिर्सियौँ ।।

बिर्सियौँ जननी धर्ती माटाको वास बिर्सियौँ ।
आफ्नो उमेर वर्णादि शील संस्कार बिर्सियौँ ।।

लाज सर्म कता भाग्यो मान्यता भासियो कता ?
शिष्टाचार सदाचार सद्भाव भासियो कता ?

बढ्यो फोस्रो अहङ्कार विद्याबुद्धि गयो कता ?
अन्तर्मुखी हुने भाव हाम्रो आज गयो कता ?

द्रव्यलोलुप भै यद्वा फसेर रसरङ्गमा ।
हाम्रो ओज सँगै वर्चस् डुब्दो छ क्षुद्र सङ्गमा ।।

मेरो यो कविता होला खाली अरण्यरोदन ।
यो जानीकन लेख्तै छु यल्ले हुन्छ विरेचन ।।

अन्यथा बन्छ अन्तस्मा कुण्ठा विकार दुर्जय ।
देखेको लेख्नु नै पर्छ बनी निर्भ्रान्त निर्भय ।।

भूतकाल सबै बिर्सौं भविष्य पनि बिर्सिऔँ ।
वर्तमान बनी बाँच्छौँ त्यस्मै स्वस्थ बनी जिऔँ ।।



# भावरूप अज्ञान

अज्ञान हो अनिर्वाच्य भावात्मक सधैँभर ।
ब्रह्मज्ञान जसै हुन्छ नासिन्छ भस्म भै तर ॥

माया अज्ञानका साथै अविद्या भावरूपक ।
अनिर्वाच्य सबै नै हुन् सृष्टिका यी सहायक ॥

सृष्टिका सहचारी हुन् ब्रह्म ईश र जीवक ।
यी विना सृष्टि नै हुन्न यी सबै त्रिगुणात्मक ॥

निमित्त र उपादान दुवै कारण ब्रह्म हो ।
घटनिर्माणमा पानी जस्तै माया त सूत्र हो ॥

जड प्रधान यद्वा त्यो जड प्रकृति नै पनि ।
सृष्टिकारण बन्दैन अचेतन कुनै पनि ॥

हुन सक्तैन संसृष्टि अभावबाट भावको ।
यो हो अकाट्य सिद्धान्त अपौरुषेय वेदको ॥

माया अज्ञानका साथै अविद्या भावरूप हुन् ।
अरू पदार्थ जस्तै यी ब्रह्ममा लीन बन्दछन् ॥

कुनै पदार्थको हुन्न सर्वथा नाश वस्तुतः ।
खाली स्वरूप फेरिन्छ रहन्छन् भित्र तत्त्वतः ॥



# मन

नाउ बस्तछ पानीमा पानीमै नाउ चल्दछ ।
पसेमा नाउमा पानी डुँगा चुर्लुम्म डुब्दछ ॥

हामी संसारमा बस्छौँ यस्मै जीवन चल्दछ ।
पसे संसार मान्छेमा मान्छे चुर्लुम्म डुब्दछ ॥

आनन्दबाट आएको म हुँ आनन्दको घर ।
विषयाऽध्यासले गर्दा भएँ दुःखी सधैँभर ॥

दौडिएँ बाहिरै नित्य न फर्की भित्रका तिर ।
विक्षिप्त मन यो मेरो सधैँ रहन्छ अस्थिर ॥

अज्ञान मलले पूर्ण पूर्व सञ्चितिको घर ।
सधैँ बन्धनमा बाँध्ने यही हो मन दुच्छर ॥

सूक्ष्म देह यसैले नै चौरासीमा घुमाउँछ ।
कैले नरक लैजान्छ कैले स्वर्ग पुऱ्याउँछ ॥

ज्ञान हुन्न जहाँसम्म मन बन्दछ बन्धन ।
ज्ञानाग्निले जसै डढ्छ मन हुन्छ विसर्जन ॥

मन साधन हो एक विवेक नगरीकन ।
मन नै साध्य ठानेमा मन नै बन्छ बन्धन ॥



# परमानन्द निर्भय

न जाओस् दोषमा दृष्टि गुणमा मात्र दृष्टि होस् ।
हाम्रो शाश्वत साहित्य विश्वका लागि सृष्टि होस् ॥

असूया भाव होस् टाढा सबैमा समता रहोस् ।
मेरो तेरो नहोस् भाव सबैमा ममता रहोस् ॥

अटाउने सबैलाई मान्छेमा क्षमता हओस् ।
मान गर्ने सबैलाई मान्छेमा नम्रता हओस् ॥

आफैँसँग डराएर भाग्ने बानी हुँदै नहोस् ।
मनमा दैन्य पालेर माग्ने बानी कबै नहोस् ॥

अरूको सुख देखेर ईर्ष्या डाहा हुँदै नहोस् ।
अरूको दुःख देखेमा मनमा वेदना हओस् ॥

अरूको दोष देखेमा आँखा चिम्लेर बिर्सिऊँ ॥
अरूको गुण नै स्यानो देखे पनि सधैँ लिऊँ ॥

जति दुःख गरोस् मान्छे ज्यानै छोडी अहर्निश ।
सारा ऐश्वर्य नै पाओस् बन्दैन तृप्त मानिस ॥

सुख पाउनका लागि मान्छे प्रयत्न गर्दछ ।
दुःखका खाडलैभित्र उल्टो गएर पर्दछ ॥

निरपेक्ष सुखै हुन्न सापेक्ष सुख दुःख हुन् ।
घाम छाया सरी नित्य पालो गरी उदाउँछन् ॥

सुखदुःख दुवै नै हुन् अध्यासजन्य विभ्रम ।
मायाविकार अध्यास उपाधियुक्त हुन् भ्रम ॥

निरपेक्ष छ आनन्द त्यहाँ छैन कुनै भय ।
आनन्द ब्रह्म हो नित्य परमानन्द निर्भय ॥





# श्रीमती इन्दिरा भट्टराईका
# कविताहरू

# आमा

सर्वोच्च शैलकै छेउ मेरो छ माइतीघर,
कुभिण्डे नामको गाउँ हो ब्रह्मस्थल सुन्दर ।
म हुँ पोखेलकी छोरी पिताजी हरिकृष्ण थे,
आमा दाहालकी पुत्री जानुका सब भन्दथे ॥

(१)

सोझा सद्व्यवहारका युगल ती राम्रा भलाद्मी थिए,
पुत्री चार र पुत्ररत्न दुइटा जन्मेर बढ्दै थिए ।
आमा बाबु मिलेर तन्मय बनी पाल्दै र पोस्तै थिए,
जानेसम्म कृतार्थ भै सकलमा संस्कार बाँड्दै थिए ॥

(२)

यस्तैमा नै खल नियतिले बाण ताकेर हानी,
बाबालाई झटपट लग्यो दुःख मान्दै नमानी ।
मेरी आमा विचलित नभै धैर्य धेरै लिएर,
पालिन् पोसिन् तनयतनया आँसु भित्रै पिएर ॥

(३)

छोराछोरी जति पनि भए पालिताली पढाई,
ठूला पारिन् हरतरहले दुःख अत्यन्त पाई ।
लड्दैभिड्दै अघिअघि बढिन् नित्य सङ्घर्ष गर्दै,
छोराछोरी स्वजनसबमा स्नेहसौहार्द छर्दै ॥

(४)

दोटी छोरी पतिघर गए भै विवाहादि कार्य,
मेरो आयो परिणय हुने जो थियो धर्मकार्य ।
झट्टै मेरो परिणय भयो खेल खेल्दै रमाई,
सानैमा नै सब हुन गयो थाह राम्रो नपाई ॥
(५)

लामीडाँडा पतिघर गएँ माइती देश छोडी,
मैले जानेँ चलन घरको नव्य सम्बन्ध जोडी ।
जे जे पर्थे सब तरहका काम झर्को नमानी,
गर्ने गर्थें जति पनि परुन् काम जानी नजानी ॥
(६)

कैले बेसी अनि त कहिले लेकमा घाँस काट्थेँ,
डोको बोक्थेँ विकट पहरा वृक्ष झाडी चहार्थें ।
गाईभैँसी दुहुन म थिएँ नित्य नै तम्तयार,
खेतीपाती सहित सब नै काममा होसियार ॥
(७)

यस्तैमा नै तनय दुइटै साथ ली दाजुभाइ,
मेरी आमा तल झरिदिइन् सुन्सरीमा बसाइ ।
मेरा आफ्ना पति पनि हिँडे पढ्नलाई भनेर,
मैले काटेँ विरहसँग नै काल एक्ली बनेर ॥
(८)

आमा बाबा पतिघर विषे जो थिए मान्य धेरै,
गर्थें सेवा हरतरहले सम्झिँदै काम मेरै ।
भित्रैदेखिन् तनमन दिई मान सम्मान गर्थें,
माया गर्थे जनकजननी हर्षले दङ्ग पर्थें ॥

(९)

कैले कैले प्रिय पति बिदा बीचमा पाइ खास,
गर्ने गर्थे जनकजननी साथमा नै निवास ।
मेरा सारा तन र मनमा बग्दथ्यो हर्षधारा,
देख्ने गर्थें झलमल म ता सृष्टिसौन्दर्य सारा ॥

(१०)

माया गर्थे पति पनि सँगै एक निष्ठा लिएर,
राम्रो गर्थे यमनियमले सारसत्त्व दिएर ।
जान्थे चाँडै पति पर हुँदै सम्झनामात्र छाडी,
जान्थ्यो मेरो मन पतिसँगै साथ लागी पछाडि ॥

(११)

बाच्थें आमा अनि पति भनी सम्झनामा हराई,
देखें सप्नाहुँदि यदि भने हर्ष लाग्थ्यो मलाई ।
कैले कैले अशुभ सपनी देखिए दुःख मानी,
पूजा गर्थें वरपिपलको हुन्छ राम्रो कि ! ठानी ॥

(१२)

छोरी जन्मी रहर मनकी हर्ष मानी रमाएँ,

मेरा प्यारा पति पर थिए पत्र लेखी पठाएँ ।

आए केही दिनपछि उनी हर्ष साथै मनायौँ,

लक्ष्मी सम्झी हरतरहले पालिपोसी बढायौँ ।।

(१३)

आए हाम्रा युगल घरमा स्वप्न जस्तै बनेर,

चाँडै लागे पर पर कता दूर ती अल्पिएर ।

स्वप्ना सम्झी सहज सहियो स्वप्नमै दुःख पाएँ,

मेरो होला नियति कि ! भनी चित्त आफ्नू बुझाएँ ।।

(१४)

जे जे पर्थे सब सहिरहेँ कर्मको खेल भन्दै,

काटेँ मैले दिन र रजनी मासवर्षादि गन्दै ।

बाटो हेर्थें पति लिन छिटै आउलान् नै भनेर,

यस्तैमा नै पति घर पुगे देवताझैँ बनेर ।।

(१५)

थाहा पाएँ अब त पतिले साथ लान्छन् भनेर,

फक्र्यो मेरो मन सुमनझैँ दङ्ग साह्रै परेर ।

लायौँ टीका शुभविजयको चाड मान्यौ तिहार,

माया पायौँ जनकजननीबाट आशीः हजार ।।

(१६)

हिड्नैलाई नियत जब भो वैरिए बन्धु सारा,
रोए प्यारा जनकजननी बर्सिए अश्रु धारा ।
लागेँ आफ्ना पति पछि भई सुस्त छाया बनेर,
ठानेँ मैले व्रत र तपको पुण्य हो यो भनेर ॥
(१७)

लक्ष्मी छोरी अघि अघि बढिन् बाबुआमा पछाडि,
लाग्यौँ हामी सहज गतिले धैर्य आफ्नू छाडी ।
कोसी रोसी विकट पहरा भीर काट्तै डराई,
आयौँ तेह्रौँ दिन सहरमा पैदलै दुःख पाई ॥
(१८)

मेरो इच्छा अतिशय थियो काठमाडौँ गएर,
बस्ने घुम्ने पतिसित रही जागिरेनी भएर ।
मेरो इच्छा सफल हुन गो उघ्रियो जो कपाट,
मैले पाएँ सुफल पतिकै स्वच्छसत्कर्मबाट ॥
(१९)

डेरा खोजी नियमित भयौँ काठमाडौँ पुगेर,
हाम्रा बित्थे दिन र रजनी शान्तिका साथ धेर ।
कान्छी छोरी पछि सुत भए तीन सर्वाङ्गपूर्ण,
हाम्रो इच्छा हरतरहले सर्वथा भो प्रपूर्ण ॥
(२०)

बढ्थे मेरा पति अघि सधैँ मान सम्मान पाई,
कैले चढ्थे शिखर हिमका फेरि झर्थे तराई ।
घुम्दाघुम्दै क्रमसँग बढी सिंहदर्बार आई,
पाए राम्रो पद सचिवको जो बने हाइहाइ ॥
(२१)

ठाडो पारी शिर अघि बढे भ्रष्ट जाली हटाई,
हुन्थे टाढा पतित जन ती त्रास मान्थे डराई ।
गर्दागर्दै अतिशय सफा काम राखेर नाम,
पाए धेरै सुयश पतिले मान साथै इनाम ॥
(२२)

कैले जान्थे परपर उडी सिन्धु सातै तरेर,
फर्कन्थे नै सफल पति ती उच्च शिक्षा पढेर ।
यस्तै चालासित अघि बढी उच्च आदर्श राखी,
आए फर्की घर पति कुनै तुच्छ आशा नराखी ॥
(२३)

दोटै छोरी पति घर गई बस्तछन् ज्वाइँ साथ,
तीनै छोरा परिणय भई बस्तछन् शान्तिसाथ ।
छोराछोरी घुमफिर गरी आउँछन् भेट्नलाई,
हामी हुन्छौँ अतिशय खुसी साथ सन्तान पाई ॥
(२४)

ऐले हामी युगल दुइटै स्वस्थ छौँ साथ बस्छौँ,
पढ्छौँ गुन्छौँ परहित हुने दानपुण्यादि गर्छौँ ।
यो हो साह्रै क्षणिक दुनियाँ बस्नु नै छैन धेर,
हामी बस्छौँ विरत अति भै पाहुनाझैँ बनेर ।।

(२५)

मैले लेखेँ स्वगृहतिरको हाल सङ्क्षेप गर्दै,
लेख्नै लाग्यो कलम अब यो माइतीदेश तर्दै ।
मेरी आमा जब तल झरिन् बस्नलाई तराई,
भेट्नैलाई अति कठिन भै माइती भो पराई ।।

(२६)

आएँ जैले पतिसँग बसेँ भेट्न जान्थेँ म आमा,
ठान्थेँ उत्र्यो सहजसँग नै स्वर्ग यद्वा धरामा ।
आमाको त्यो अतिशय उँचो पाइ आदर्श काख,
लाग्थ्यो धर्ती अपरपुर भो मिल्न गो सौख्य लाख ।।

(२७)

मेरी आमा सफल अति नै जो थिइन् काम गर्दा,
आँटी शूरी चतुर गृहिणी सिंहिनी काम पर्दा ।
मेरी आमा घर चलनमा स्नेहकी दिव्य खानी,
एक्लै ल्याइन् सकल घर नै फुर्तिले माथि तानी ।।

(२८)

मेरी आमा विवश विधवा जो बनिन् दुःख पाइन्,
हामी सानै शिशु सब थियौँ पालिताली बढाइन् ।
आमा बाँचिन् सफल अति भै ती बनिन् जो शतायु,
आमालाई नियतिवश नै मिल्न गो दीर्घ आयु ॥

(२९)

काटिन् आमा सय जब उनी जीर्णताले सतायो,
हिँड्नै डुल्नै सकस हुन गो होस केही हरायो ।
होला राम्रो पछितक भनी ओखती गर्नलाई,
ल्यायौँ आमा झटपट गरी काठमाडौँ उडाई ॥

(३०)

ल्याएँ आफ्नै घर अनि गरेँ सत्कथैँ गर्न जस्तो,
पाएँ मैले नजिक जननी काख सर्वस्वजस्तो ।
आमाले नै अघि शिशु हुँदा जो गरिन् सेकताप,
मैले बोकेँ उऋण नहुने पूर्वको उग्र पाप ॥

(३१)

गर्ने गर्थें उऋण हुन नै नित्य सेवासुसार,
हेर्ने गर्थें शुभद अति नै सौम्य राम्रो मुहार ।
मेरी आमा हँसमुख सधैँ रोग नै छैन जस्ती,
मेरी आमा झलमल सधैँ शुभ्र कैलासजस्ती ॥

(३२)

मेरी आमा सरल अति नै एक गाई समान,
मेरी आमा अटल अति नै शैलचोटी समान।
मैले पाएँ त्यस समयमा भन्न आमा भनेर,
मैले पाएँ टहल उनको गर्न छोरी बनेर ॥
(३३)
मैले पाएँ अवसर ठुलो गर्न सेवा मुमाको,
यल्ले मेरो हृदय हलुको भैगयो सर्वदाको।
मेरो भित्री अतल मनको नासियो अन्धकार,
यद्वा साँच्चै उऋण म भएँ झुल्कियो सद्विचार ॥
(३४)
यस्तैमा नै सुझबुझ गयो बिर्सने रोग लागी,
बोल्ने चल्ने सब पर भयो होस गो दूर भागी।
सुत्थिन् आमा अविचल भई मौनतासाथ नित्य,
ठानिन् यद्वा क्षणिक जगतै यो सबै हो अनित्य ॥
(३५)
यद्वा आमा अविचल बनी ब्रह्ममै लीन बन्दै,
बिर्सेकी हुन् स्वजन सब यी तुच्छ संसार भन्दै।
यद्वा आमा हृदय तहमा ब्रह्मको ध्यान गर्दै,
पुग्ने गर्छिन् पर पर कता मृत्युसंसार तर्दै ॥
(३६)

यस्तै सोच्थेँ तर पनि सधैँ त्रास लाग्थ्यो मलाई,
फर्केला नै सुधबुध भनी आस लाग्थ्यो मलाई।
कैले देख्थेँ अशुभ सपना दिक्क लाग्थ्यो मलाई,
यस्तै हुन्थ्यो दिन र रजनी शून्य लाग्थ्यो मलाई॥

(३७)

पैले बोल्थिन् मृदुवचनले कत्ति केही नझर्की,
इच्छा गर्थिन् अतिशय उनी गाउँमा जान फर्की।
मैले ठाने अलि अलि गरी तान्छ संस्कार आई,
बूढाबूढी विगत दिनमै पुग्दछन् ती हराई॥

(३८)

जाने गर्थें नियमित सधैँ बोल्न आमा भनेर,
सुत्थिन् आमा सुधबुध नभै मात्र मूढो बनेर॥
सुत्तासुत्तै सकल जिउमा आउँथे घाउ धेर,
रुन्थेँ साह्रै विचलित भई न्याउलीझैँ बनेर॥

(३९)

यस्तैमा नै नियमितसरी क्यै सबेरै उठेर,
आमा हेर्ने मनसँग गएँ कक्षमा खाटनेर।
आमालाई मृदुवचनले उठ्नु भन्दै कराएँ,
अत्तोपत्तो हलचल नभै शून्य देखी डराएँ॥

(४०)

छामेँ हेरेँ मुटु ढुकढुकी बन्द, देखेँ, कराएँ,
छामेँ नाडी विचलित हुँदै मृत्यु भो चाल पाएँ ।
सार्‍यौँ तुल्सीमठनिर लगी रामको नाम जप्तै,
मूर्च्छा आयो विचलित भएँ ब्यूँझिएँ शोक खप्तै ॥
(४१)
आए आफ्ना परिजन लगे दाहसंस्कारलाई,
आमा लागिन् अमरपुरका तर्फ सारा रुवाई ।
हामी रोयौँ खपिनसकिने शोक भित्रै दबाई,
आमालाई क्रमिक सबले गर्दियौँ हा ! बिदाइ ।
(४२)
पहिले जननीलाई ल्याएथेँ घरमा जब,
भएथ्यो घरमा मेरो अति ठूलो महोत्सव ।
आमा गइन् परेँ मूर्च्छा अँध्यारो भो सबैतिर,
ठानेर सब यो मिथ्या चुप लागेँ म आखिर ॥
(४३)
ब्रह्मलीन भइन् आमा शुद्ध स्वच्छ थियो मन,
फेरि आउनुपर्दैन यहाँ जन्म लिईकन ।
बाँचेकी छु यही सम्झी बुझाईकन यो मन,
बुझाउँ जति नै चित्त उति नै गर्छ क्रन्दन ॥
(४४)

चिन्हाको नाम हो लालकुमारी ललिता भनी,
आमाले दिनु भो नाम इन्दिरा पतिले पनि ।
मेरा हुन् नाम जे जस्ता मिथ्या हुन् सब यी तर,
एउटै ब्रह्म हो साँचो जो रहन्छ सधैँभर ॥
(४५)
गर्न के सक्छु हे आमा ? मेरो सामर्थ्य के छ र ?
म गर्छु सम्झनामात्रै आमालाई निरन्तर ।
आमाकै साँहिली छोरी आमाकै रक्तकी कण,
सश्रद्ध अहिले गर्छु श्रद्धाञ्जलि समर्पण ॥
(४६)

– *वन्दनाबाट*



# घामछाया

आमाको सम्झनानिम्ति लेखेथैँ कविता जुन ।
त्यल्ले गतार्थ नै हुन्छ के लेखौँ अरू खै पुनः ॥

त्यस्कै पूरक सम्झेर क्यै लेख्न अघि सर्दछु ।
कविता मञ्जरीलाई म समर्पण गर्दछु ॥

जिन्दगी घामछाया हो सुखदुःख बराबर ।
रथको चक्र झैँ घुम्छन् विश्रान्ति नै कहाँ छ र ?

गाउँ दुर्गममा जन्मेँ अबोध बालिका थिएँ ।
बाबा जानु भयो चाँडै आमाका साथ हुर्किएँ ॥

पोखेल कुलकी छोरी भट्टराई भयो घर ।
म आज रुग्ण भै बाँच्छु लिई शरीर जर्जर ॥

जन्मेँ पहाडमा आएँ काठमाडौँ सँगै पति ।
जन्मे सन्तान पाँचोटा बढे पढे लिई गति ॥

विदेशमा गई काम गर्छन् छोराहरू दुई ।
ठूली छोरी उतै नै छन् पति सन्तान नै लिई ॥

सानी छोरी यहीं बस्छिन् पतिका घरमा गई ।
सतीश पुत्रका साथ हामी बस्छौँ खुसी भई ॥

सुख  दुःख घुमेका छन् आँखामा चलचित्र झैँ ।
अनुभूत गरी बस्छु म यौटी मौन मूर्ति झैँ ॥



# एकाङ्गी जीवन

म यौटी गृहिणी साध्वी पोखेलकी वधू म हुँ ।
म छोरी भट्टराईकी विशुद्ध कुलवंश हुँ ॥

बालिका कालमै मेरो विवाह भो गएँ घर ।
बुहारी भै सबै काम गर्थें म भई तत्पर ॥

ससुरा सासु आमाजु जेठानी अनि देवर ।
खान्दानी घरको चाल थियो चलन सुन्दर ॥

माइतीमा पितामाताबाट स्नेह म पाउँथें ।
दिदी र बहिनी दाजु सबैको प्यार पाउँथें ॥

घरमा पनि सम्पूर्ण यथायोग्य सबै जन ।
माया गर्थे म सत्कार गर्थें संभी सुहृद्‌जन ॥

म भएँ पतिकी प्यारी सन्तान क्रमले भए ।
तीन पुत्रहरू साथै चार पुत्रीहरू भए ॥

चार्खुबाट झऱ्यौं हामी उदयैपुरका तिर ।
छोराछोरी पढी राम्रो भए योग्य र सुस्थिर ॥

विवाह पुत्र पुत्रीको गरिएथ्यो क्रमैसँग ।
मेरा दिनहरू बित्थे पतिसाथ सुखैसँग ।।

यस्तैमा पतिको मृत्यु भयो र वज्र वज्रियो ।
हाम्रो घर भयो शून्य लथालङ्ग सरी भयो ।।

बिस्तारै सब सम्हिलयौँ बिस्तारै भो सबै स्थिर ।
छोरा छोरी सबै ऐले छन् स्वावलम्बका तिर ।।

एकाङ्गी हुन गै बस्छु भक्तिमार्ग लिईकन ।
राधाकृष्ण जपी मेरो बित्तै छ शेष जीवन ।।





# बहिनी तारा पोख्रेलका कविताहरू

# आमाको सम्झनामा

लामीडाँडा घर हो भट्टराई थर हो नाम् धर्मदत्त कहुँ,
बयासी वर्षको पिताजी हुनुभो छोरी उहाँकी म हुँ ।
दिन्को एक पटक मिलाई सब काम पुग्थेँ नि आमा निर,
आजैमात्र भुलेँछु नि किन मता लाग्यो नि सारै पीर ॥
(१)
यही गर्छु पुकार भित्री मनले द्यौताहरूमा पनि,
केही वर्ष मलाई औधि दिनुहोस् आमा भनोस् है भनी ।
दिन्को एक पटक् पुगेर नजिकै भन्छु म आमा भनी,
शीतल् केही बचन् सुनेर मनका हट्छन् सबै पीर् पनि ॥
(२)
एक्तीस वर्ष पुगेछु नि अब मता आमा बहत्तर् हुँदा,
ज्यूको मासु पनि सबै भिजिसक्यो घर्मा बसेरै रुँदा ।
आत्मज्ञान मलाई छैन भगवन् ! आधार खाली रुने,
धेरै शोक गरी सधैँभरि यहाँ रोएर पो के हुने ॥
(३)
सान्है रोग बढेर जीर्ण हुनुभो दाजु झिकाई दियौँ,
आमा जानुभयो नि हस्पिटलमा हामी घरैमा रह्यौँ ।
ब्रह्मा विष्णु शिवै र हे भगवति ! यही पुकारा लिनुस्,
आमा भन्न रहर् छ हामीहरूमा क्यै वर्ष औधि दिनुस् ॥
(४)

आगोले वन जल्छ धेर जसरी मन् जल्छ स्वै रीतले,
यो दिल् बुझ्छ भनेर नि बल गर्‍यौ मान्दैन नि चित्तले ।
बिहान् पाँच बजे उठेर हिँडियो माताजी हेर्नै भनी,
सानु पुत्र रह्यो नि आज घरमा चाँडो छ फिर्नु पनि ॥
(५)
साँढे नौ बजदा पुग्यौँ नि नजिकै बेला भयो खानको,
आमा-छोरी बसेर क्यै पनि हरे ! मार्‍यौँ न क्यै बात जो ।
पानी पर्न गयो त ज्येष्ठ महिना सार्‍है अँध्यारो भई,
उड्ने पंछी भए कति उडदथेँ रुन्छु घरैमा रही ॥
(६)
छोरा छोरी भएर बालख म ता परेँछु जन्जालमा,
डाक्टर्को सहयोग रहन्छ कति पो टर्दैन क्यै कालमा ।
एक्स-रे पनि गर्नु पर्छ भनेछन् व्यथा हुँदा छातीको,
उमेर् धेर त छैन है जननीको खेला छ कुन पापीको ।
(७)
चालीस् वर्ष अगाडि रोगी हुनुभो भएर पेटमा गोला,
डाक्टर्को सहयोग पुग्छ कि ! कतै फिरेर आउनु होला ।
चिन्ता धेर् मनमा लिई कति बसौँ कि प्राण त्यागौँ बरु,
आमाको त मलाई प्यार नटुटोस् कि प्राण त्यागूँ बरु ॥
(८)

दोस्रो पल्ट गएँ म हेरन भनी बसेँ सिरानी निर,
बाँचे बाबु ! अवश्य उठ्छु अबता नलेउ मेरो पीर ।
भन्ने बाणी सुनेर नै जननीको केही उज्यालो मन,
एक् घण्टा बसदा बितेछ दिन ता आएँ नि फर्किकन ॥
(९)

आमाकै मुख घुम्छ यी नजरमा सम्झन्छु रातो दिन,
घर्मा गै मन घुम्छ कि जननीको रोग्ले सतायो किन ?
धेरै शोक पर्‍यो अघि जननीमा हामी दुधिया रह्यौँ,
ऐले रोग बढेर गो जननीको बैरागी जस्ता भयौँ ॥
(१०)

तिनोटी दिदी बैनी हामीहरू नि दाजु दुई भाइ ता,
सन्तोष्ले दिन बित्न लागि रहेछ आमा सुबिस्ता हुँदा ।
सानु गन्थन आज लेखिसकियो सम्झी उनै देवीलाई,
रक्षा गर्दिनु हे महेश शिवले हाम्रो परिवारलाई ॥
(११)



# जीवनी

पहाड् जन्म भयो र काम तिर नै मैले पनि मन् दिएँ,
ऐले दुःख परेछ कि र किन हो यै लेख्न सोची लिएँ ।
विद्या छैन मलाई हुँ अनपढ जान्दिन लेख्नै पनि,
ऐले चित्त महा गड्यो सब कुरा पैले बितेका पनि ॥

(१)

मेरो जन्म पहाडमा हुन गयो विवाह उहीँ भयो,
के के यी मनका लहड्हरू थिए धोको नफोई रह्यो ।
गृहस्थी बनी काम नै गरदछु घर्मा परेका जति,
दिन दिनमा गरियो शरीर् भिजी सक्यो मन् हुन्छ चिन्तित् अति ॥

(२)

कि कम्जोर भए बयान चलने कि बल् भएमा अति,
हेर्दा स्वच्छ छु मात्र पीर मनले लाग्दैन तागत् रति ।
आकाश्मा घुमने यी सूर्य भगवान् पुग्छन् नि पृथ्वी भरि,
सारै दुःख मलाई छैन किन हो मन् उड्छ हावा सरी ॥

(३)

द्रष्टव्य :– पिता-मातालाई आफ्ना प्यारा सन्तानको माया ममता र प्यार जुन प्रकारबाट उर्लिन्छ सोही रीतबाट आफ्ना प्यारा नानीहरूबाट पनि जन्मदाता पिता-माताप्रति स्नेह ममता रहन्छ । यसमा आफ्नी आमा क्षयरोगबाट पीडित भएको अवस्थालाई लिई छोरी तारादेवी पोखेलले माया पोखेको पाइन्छ ।





# ठूली छोरी सरिता दाहालको कविता

# मेरो दिनचर्या

म छोरी भट्टराईकी वधू दाहालकी म हुँ ।
बिस्तारै ऊर्ध्वगामी भै बढेकी एक शक्ति हुँ ॥

पहाड घरमा जन्मेँ हुर्किएँ लाडप्यारले ।
दिदी दाजुसँगै खेली बित्यो शैशव सुख्खले ॥

आएँ म काठमाडौँमा बाबा आमा सँगै जब ।
भीर पर्वत काटेर तेह्रौँ दिन हिँडी तब ॥

आएर काठमाडौँमा शिक्षादीक्षा सबै भए ।
विवाह भो गृहस्थी भै तीन सन्तान जन्मिए ॥

अध्यापन गरेँ मैले सन्तान हुर्किए पढे ।
पढी स्वकार्यका तर्फ छोरा छोरी सबै बढे ॥

डी.बी. परी अमेरीका गइयो सब नै जहाँ ।
पढी छोरी दुवैको नै भयो विवाह नै त्यहाँ ॥

छोरो पढी सकी ऐले गर्छ काम खुसी भई ।
छोरा सँगै दुवै बस्छौँ ऐले अमेरिका गई ॥

कैले अमेरिका जान्छौँ कैले नेपाल आउँछौँ ।
मातापिता ससूराको स्नेह वात्सल्य पाउँछौँ ॥

माइती छ छिमेकैमा भाइबन्धु समीप छन् ।
सामाजिक सुसम्बन्ध भाइचारा अतीव छन् ॥

हाम्रो जीवनको चक्र घुमेको छ यसै गरी ।
अति आनन्दमा नै छौँ प्रारब्ध कर्मले गरी ॥

*– डलास, टेक्सास, संयुक्तराज्य अमेरिका*





# कान्छी छोरी सविता अर्यालको कविता

# सन्तुष्ट भई बस्तछु

म पुत्री भट्टराईकी पत्नी अर्यालकी म हुँ ।
गृहिणी घरकी यौटी सामान्य महिला म हुँ ॥

म आफ्नै पनकी मान्छे घरमा नै रमाउँछु ।
छोरी दुइटीको स्नेह पतिको प्यार पाउँछु ॥

बुहारी सद्गृहस्थीकी ससुरा सासुकी प्रिय ।
नन्द देवर द्यौरानी परिवार छ सुप्रिय ॥

सबैका साथमा बस्ता आनन्द अति मिल्दछ ।
पारस्परिक सद्भाव यल्ले सुदृढ बन्दछ ॥

मातापिता समीपैमा घर हाम्रो छ सुन्दर ।
नडुली घरमै बस्छु यही लाग्छ मनोहर ॥

आमाको ममता मिल्छ पिताको मिल्छ लालना ।
साध्वी सोझी सदाचारी गर्छु सद्धर्म पालना ॥

दुइटी छोरी छन् जेठी अमेरिका गईकन ।
पढी विवाह त्यहीँ नै गर्‍यौँ हामी गईकन ॥

कान्छी छोरी सँगैमा छन् पढ्दैछन् मन दीकन ।
हामी सन्तुष्ट छौँ सारै पाई सुन्दर जीवन ॥



# स्नेहसंसिक्त मन्दिर

जन्मिएँ पोखरामा म काठमाडौँ गई पढेँ ।
मातृवात्सल्य पाएर पिताको प्यारले बढेँ ।।

सतीश म सँगै जन्म्यौँ पढ्यौँ साथै भईकन ।
मेरो स्वकार्यले गर्दा बस्छु दूर गईकन ।।

नेपालको सकी शिक्षा युक्रेनमा गईकन ।
वायुयानीय विज्ञान पढेँ मैले दिई मन ।।

उच्च शिक्षा लिई फर्कें विवाह पनि भो जब ।
नेपालमैँ गरेँ काम घरमा नै बसेँ तब ।।

बिस्तारै क्यानडा आएँ प्रवेशाज्ञा लिईकन ।
सोही विद्या पढेँ उच्च मिहिनेत गरीकन ।।

भएँ योग्य अझै मैले गरेँ अनुभवै पनि ।
योग्य काम मिलेको छ बस्छु सन्तुष्ट नै बनी ।।

प्रारब्धले यहाँ ल्यायो सुविधा सब प्राप्त छन् ।
आफ्ना मानिस थोरै छन् स्नेह सौहार्द न्यून छन् ।।

पत्रैपत्र  पढेँ मैले स्नेहार्द्र मन पग्लियो ।
आमाको ममता सम्झेँ बाबाको प्यार झल्कियो ॥

भौतिकी सुविधा सारा पाए पनि कताकता ।
मनमा भित्र खड्कन्छ अभाव अनि रिक्तता ॥

भौतिकी सुखका साथै चाहिन्छ स्नेहको पुट ।
अन्यथा हुन्छ बाँचेको एकाङ्गीपनले युत ॥

बाबा आमा दुबैबाट बर्सिँदो स्नेह झर्झर ।
नेपाल घर हो मेरो स्नेहसंसिक्त मन्दिर ॥

दिनरात म सम्झन्छु मातापिता सुहृज्जन ।
यद्वा नियतिले मेरो फर्काउँछ कि ! यो मन ॥

भन्छ अन्तर आत्माले फर्की नेपालमै भनी ।
अब ता सोच्नु नै पर्ला मैले भावुक नै बनी ॥

*– केलगेरी, क्यानडा*





# सानो छोरो सतीशकुमार भट्टराईको कविता

# फर्केर आऊ घर

नेपाल घर हो मेरो नेपालमै म बस्तछु ।
वृद्ध मातापिताको नै सेवा गरेर मस्त छु ॥

यो हो प्रकृतिको कुञ्ज यो हो सद्धर्मको घर ।
यो हो साधुतपस्वीको तपस्थली मनोहर ॥

हिमाल सौम्य पाहाड मधेश नित्य उर्वर ।
यस्तो मिलेको सर्वाङ्ग धरती नै कहाँ छ र ?

विदेशीको गरी सेवा सधैँ विदेशमै बसी ।
बाँच्नु भन्दा त सेवा म गर्छु नेपालमैँ बसी ॥

सुखदुःख जसो मिल्छ त्यसमैँ म रमाउँछु ।
मातापिता सँगै बस्छु स्नेह वात्सल्य पाउँछु ॥

आफन्त जन सन्मित्र सुहृद् बन्धु र बान्धव ।
सबैसँग मिली बस्छु यही ठानेर वैभव ॥

जे मिल्छ सुख वा दुःख सबै स्वीकार गर्दछु ।
पुरुषार्थ र प्रारब्ध दुवै विश्वास गर्दछु ॥

बाबाले ग्रन्थ धेरै नै लेख्नुभो कष्ट जो गरी ।
पढौँ हामी गरौँ रक्षा सम्झौँ देन सधैँभरि ॥

पत्रैपत्र तिमी पढ्यौ पिताले लेख्नु भो जुन ।
त्यो हो सन्देश आदेश पढेर मनमा गुन ॥

पुस्तकालय हाम्रो छ अमूल्य ग्रन्थरत्न छन् ।
अष्टादश पुराणादि वेदान्त चार वेद छन् ॥

सबै दर्शन छन् त्यस्मा जस्मा आस्तिक नास्तिक ।
साङ्ख्य न्याय मीमांसा छन् अङ्ग व्याकरणादिक ॥

हो अनुस्मृति बाबाको जीवन्त जीवनी जुन ।
त्यसमै सब पाइन्छ हाम्रो सद्वंशकीर्तन ॥

बाबाको जीवनीले नै हाम्रो ऐतिह्य खोल्दछ ।
त्यल्ले मुखर वक्ता भै सुखदुःखादि बोल्दछ ॥

विदेशमा गई बस्छौ दाजु भाइ सुहृज्जन ।
आऊ फर्केर नेपाल गरौँ सेवा मिलीकन ॥

वृद्ध मातापिता छोडी बस्ता के शान्ति पाउला ?
त्यसै कारण नेपाल फर्क आनन्द पाउला ॥

अमूल्य पसिना सिन्ची गरी सद्धन सञ्चय ।
बनेको घर यो हाम्रो आनन्दप्रद निर्भय ।।

परिवार मिली बस्ने यो साझा घर सुन्दर ।
वृद्ध मातापिता बस्ने सुशान्त सौम्य मन्दिर ।।

दुई भाइ सँगै जन्म्यौँ अहिले दूर भैकन ।
बस्तछौँ कर्मको लेखा स्नेह सद्भाव लीकन ।।



# जीवन

हैन जीवन गुलाबको बिछौना
होस गरौँ,
यसमा छन् धेरै काँडाका खेलौना
गर्नुपर्छ सङ्घर्ष यहाँ सुख पाउन
केही दिनको दुःखले निराश नहोऊँ

दुःख छन् आ-आफ्नै आ-आफ्नै छन् व्यथा
के सुनाउनु अरूलाई आफ्नो सङ्घर्षको कथा
हामी चाहन्छौँ प्रगति, पाउँछौँ आ-आफ्नै प्रथा
कहिले गाडिन्छौँ त कहिल्यै उच्च हुन्छ हाम्रो माया

सोच अनुरूप भए हाम्रो जीवनको प्राथमिकता
के सही के गलत ? भुलिन्छ मन कता हो कता
चाहन्छन् कोही पैसा, त कोही नातागोता
तर,
सकारात्मक सोचले बढाउँछ हामी बीचको एकता ।



# विवाह र बुहारी

फूलैफूलको डोली जन्ती र बाजा,
बिदा भइन् छोरी जन्मघरबाट ।
गहभरि आँसु, मनभरि गाँठो,
लिएर हिँडिन् आज नौलो बाटो ॥
बिछोड, निराशा,
नवजीवन, उमङ्ग,
मनमा भावनाका हजारौँ तरङ्ग ।
सासू, ससुरा, देवर र नन्द,
पतिको मायामा नयाँ आनन्द ।
पराई घरमा नौलो छ रीति,
नौलो रिवाज,
हिजोकी बाला वधू भइन् आज ।
सारी र घुम्टो सोह्र शृङ्गार,
ढाकियो व्यक्तित्व गहनाको माझ ।
स्वच्छन्द हाँसो बन्यो मुस्कान,
शालीनताले ढाक्यो बालापन,
कमिज जामामा प्रतिबन्ध लाग्यो,
परिवर्तन भयो सम्पूर्ण पहिरन,
अवाक् भएर उनी हेर्छिन् दर्पण ।
प्रतिबिम्ब उही तस्बिर नौलो,

आफ्नो छविमा आधीन्य अरू कसैको ।
शिक्षिता नारी आधुनिक विचार,
जागिर अनि तालिम बन्नु छ दक्ष,
जीवनसाथीको थामेर हात,
सफल भविष्य बुन्ने छ लक्ष्य ।
सासूले चाबी सुम्पी भन्नुहुन्छ,
तिमी सम्हाले घरको वागडोर,
भान्छालाई माने आफ्नो कर्मक्षेत्र ।
पतिको इच्छालाई धर्म मान,
उनकै खुसीलाई आफ्नो खुसी ठान ।
भाइ र भतिज, पतिको प्रगति,
यिनैमा रमाई चलाऊ गृहस्थी ।
उत्साह र साहस भरिएको मन,
थियो स्वच्छन्द, स्वतन्त्र हिजोको जीवन ।
आमाकी सँगी बाबाकी पुत्री,
छोरा र छोरीकी जननी भेद ।
विवाह पश्चात् सबै फरक भो,
नारी र पुरुषको दुनियाँ अलग भो ।।

*– तास्मानिया, अष्ट्रेलिया*

*मेसेन्जरद्वारा प्राप्त*





# कान्छो छोरो सगुनकुमार भट्टराईको कविता

# प्रारब्ध बलवत्तर

पत्रैपत्र पढी भाव मनमा झल्कियो जुन ।
सुषुप्त भावना जाग्यो उद्दीप्त अति भैकन ॥

भई प्रेरित त्यैबाट पोख्तै छु मनमा छ जे ।
शब्दले पोख्न के सक्नु ? मनमा भावना छ जे ॥

मेरा प्रारब्धले ल्यायो टाढा दूर कता कता ।
यसमै मस्त भै बस्छु कर्मका साथ नै म ता ॥

बाबा आमा सँगै बस्न चाहन्थेँ तर कर्मले ।
अष्ट्रेलिया पुऱ्याएर राखेको छ सुकर्मले ॥

पत्रैपत्र भिजेको छ रक्तका कणिका भरि ।
आमाका दूधको भारा तिर्न सक्तिन क्यै गरी ॥

बाबाका ग्रन्थ छन् धेरै स्वयं लिखित सुन्दर ।
पढ्न सक्तिन ती सारा ठान्छु दुरूह दुस्तर ॥

आमाको प्यार सम्झन्छु बाबाको स्नेह पाउँछु ।
मलाई यिनले तान्छन् फर्केर घर आउँछु ॥

जन्में बढें पढें मैले धरती यसमै तर ।
मेरो प्रारब्धले कर्म गराउँदैछ लगी पर ॥

छोरा दुई लिई आयौँ हामी दम्पति साथमा ।
आमाबाबा सँगै बस्छौँ स्नेह र प्यार साथमा ॥

भक्ति र ज्ञानको पूर्ण पुराण यज्ञ सत्कथा ।
प्रवाहित भएको छ पखाली मनको व्यथा ॥

समाप्तिमा छ संस्कार व्रतबन्ध सुदीपको ।
जेठो नाति र छोरो हो हामी वसिष्ठ वंशको ॥

यो सकी फेरि फर्कन्छौँ सिड्नी अष्ट्रेलिया तिर ।
माता पिता दुबैबाट पाई आशीष सुस्थिर ॥

हामीले भोग्नु नै पर्छ कर्म जे छ सधैँभर ।
खोजेर मात्र पाइन्न प्रारब्ध बलवत्तर ॥

*– सिड्नी, अष्ट्रेलिया*



# आमाको आशीर्वाद

माया अनि ममताका फूल हौ तिमी
मुस्कुराउँदा हँसाइदिने तिमी,
रिसाउँदा आँसु झार्ने तिमी,
छुनमुन छुनमुन मेरा घर आँगनमा तिमी ॥

मेरो सानो संसार हौ तिमी,
मन हुन्छ दङ्ग साथमा हुँदा तिमी,
आत्तिन्छ मन एकैछिन नदेख्दा तिमी,
एकै पलमा रमाउँछौ फेरि हुन्छौ उदास तिमी,
जीवन व्यर्थ छ विना तिमी ॥

संसार नै जित्नु सदा सुखी रहनु तिमी,
नाम फैलाउन चिनाउनू,
साथमा सधैँ हुनू तिमी,
देख्न पाऊँ सधैँ बालापनको तिमी,
छुनमुन छुनमुन मेरो घर आँगनमा तिमी ॥

*– सिड्नी, अष्ट्रेलिया ।*





# नातिनी सर्वज्ञा भट्टराईको कविता

# Dream

Dream, Dream, Dream
Every one has this common thing in their life
May be someones dream is just getting a beautiful wife

Someone dream may be ambitious
but on the same way they are religious

No ones dream can be blun,
Dream can be defined as magical treasure hunt.

The path to your dream is adventerous,
But on the same way its not dangerous.

If  it doesnot aware you everyday
May be, the dream can just fade away
So,
Stop to overthink
and
Start to work
Because every day is new
And you can get loser to your dream

And yes you can do it



# लेखकका प्रकाशित ग्रन्थहरू

## आध्यात्मिक

१. ज्ञान र भक्ति – २०६३
२. रासपञ्चाध्यायी – २०६४
३. ब्रह्मसाक्षात्कार – २०६५
४. उपनिषत्सार – २०६७
५. ब्रह्मसूत्रसार – २०६७
६. मणिरत्नमाला अनुवाद – २०६७
७. अध्यास र चतुःसूत्री – २०६८
८. वेदान्तपरिभाषासार – २०६८
९. श्रीकृष्णाय वयन्नुमः – २०६९
१०. परमसत्य – २०६९
११. अध्यास – २०६९
१२. अद्वैतसिद्धिः १ खण्ड – २०६९
१३. अद्वैतसिद्धिः २ खण्ड – २०७०
१४. अन्तिम उपदेश – २०७०
१५. ब्रह्मविद्या – २०७०
१६. अजातवाद – २०७१
१७. पराविद्या – २०७१
१८. श्रीमद्भागवतमहापुराणको अवतरणिकाको नेपाली अनुवादसहित – २०७४

## लौकिक

१. उसैको लागिको समीक्षा – २०२६
२. ऋतुमन्थन, समीक्षा – २०४४
३. सिर्जनाका फूलहरू, कविता – २०५१
४. बहादुर शाह, खण्डकाव्य – २०५२
५. श्रद्धाञ्जलि, शोककाव्य – २०५२
६. गीत तथा भजनहरू – २०५२
७. अमरसिंहको चिट्ठी, काव्य – २०५३
८. क्रान्तिदूत, खण्डकाव्य – २०५३
९. विविधयात्रा, कविता – २०५५
१०. यात्रैयात्रा, कविता – २०५८
११. पत्रैपत्र, कविता – २०५९
१२. पृथ्वीविजय, काव्य – २०६२
१३. तीर्थहरूको यात्रावृत्तान्त – २०६४
१४. अनुस्मृति (जीवनयात्रा) – २०६७
१५. वन्दना – २०६८
१६. कविशतक – २०६८
१७. अष्ट्रेलियाको दैनिकी – २०६९
१८. आभास – २०७२
१९. कवितामञ्जरी – २०७४

प्रकाशोन्मुख ग्रन्थहरू :
१. ऋतेज्ञानान्नमुक्ति, २. अष्टावक्रगीता अनुवाद,
३. अवधूतगीता अनुवाद, ४. सङ्क्षेपशारीरकसार


ISBN 993703597-X
9 789937 035972